# नेपाली

# कसरी लेख्ने ?



शरच्चन्द्र वस्ती

EP
1.49
ST

नेपाली कसरी लेख्ने ?

Nepali Kasari Lekhne ?

By Sharat Chandra Wasti

प्रथम संस्करण : २००० प्रति, साउन २०७४

द्वितीय संस्करण : २००० प्रति, कात्तिक २०७४

मूल्य : रु.३००/-

© लेखकमा

ISBN : 978-9937-0-2889-9

**प्रकाशक**

*शिक्षक* मासिक

ज्ञान-विज्ञान शैक्षिक सहकारी संस्था लि.

जावलाखेल, ललितपुर

फोन : ०१-५५४३२५२, ५५४८१४२

इमेल : mail@teacher.org.np

वेबसाइट : www.teacher.org.np

मुद्रण : सिटी प्रेस, कुपन्डोल, ललितपुर

फोन : ०१-५२६०७५२

प्रकाशकीय

# नेपाली लेख्न सजिलो पार्ने किताब

नेपाली लेखनका सन्दर्भमा ह्रस्व-दीर्घ र ब-व, श-ष-स आदिको प्रयोग धेरैका निम्ति समस्याको विषय रहँदै आएको छ। तर पछिल्ला दिनमा नेपाली लेखनका समस्या त्यतिमा मात्रै सीमित रहेका छैनन्। पठन-पाठन, व्यापार-व्यवसाय, अध्ययन-अनुसन्धान र बोलीचालीमा त नेपाली भाषाको ठाउँ साँघुरिंदो छ नै, सरकारी निकायहरू, विद्यालय, कलेज र विश्वविद्यालयमा समेत नेपाली भाषा बेवास्ता र दुर्व्यवहारको शिकार भइरहेको छ।

तथापि, 'कालो बादलमा चाँदीको घेरा' भने झैं नेपाली भाषा शुद्ध र सही ढंगबाट पढ्न र लेख्न प्रयास गर्ने उत्साहीहरूको जमात पनि यताका दिनमा उल्लेख्य ढंगले बढ्दै गएको पाइन्छ। नेपाली भाषाको शुद्धता र स्तरीकरणप्रति जनचासो र चिन्ता निर्णायक समेत बन्न थालेको छ। केही संस्था र व्यक्तिद्वारा अस्वाभाविक ढंगबाट गिजोलिएको नेपाली शब्दको हिज्जे-व्यवस्था पूर्ववत् कायम हुनुमा नेपाली भाषाप्रेमी आम नागरिककै दबावको योगदान रहेको छ।

यो पुस्तक विभिन्न कार्य-कारणबाट कमजोर हुन पुगेको आफ्नो नेपाली लेखनलाई सहज ढंगबाट सुधार गर्दै स्तरीय नेपाली भाषाको प्रयोग र विस्तारमा योगदान गर्न चाहने भाषाप्रेमीहरूलाई सघाउने उद्देश्यबाट लेखिएको हो। पुस्तक सकेसम्म धेरैलाई सजिलो लागोस्, जसले पढ्छ उसले सहजै बुझोस् र सिकोस्, किताबमा दिइएका कुरा बुझ्न अर्को गुरु-शिक्षक खोज्नु नपरोस् भन्ने प्रयास गरिएको छ। नेपाली हिज्जे र वाक्य लेखनका नियमहरूलाई स्पष्ट पार्न कसरी लेख्ने र कसरी चाहिं नलेख्ने भनेर उदाहरणहरू नै दिइएको छ। कुन शब्द कसरी लेख्दा शुद्ध र कसरी

लेख्दा अशुद्ध हुने रहेछ भनेर तत्काल सिक्न र सच्याउन मद्दत गर्ने 'हिज्जेको हेक्का' (पृष्ठ १०३-१४९) यस पुस्तकको सबैभन्दा उपयोगी खण्ड हो भन्ने हाम्रो बुझाइ छ । समग्रमा नेपाली लेख्नैपर्ने पेशा र व्यवसायमा रहेका, नेपाली लेखन सुधार गरी आत्मविश्वासका साथ आफूलाई लेख्य नेपालीमा अभिव्यक्त गर्न उत्सुक तथा सरकारी अड्डा, अदालत, व्यापार, व्यवसाय, बैंक, विद्यालय, विश्वविद्यालय आदिमा कार्यरत कर्मचारी समेत सबैका निम्ति यो पुस्तक सहयोगी र मार्गदर्शक बन्न सक्छ । यो किताब साथमा भएपछि नेपाली कसरी लेख्ने होला भनेर कोही पनि द्विविधामा पर्नुपर्नेछैन भन्ने हाम्रो विश्वास छ ।

नेपाली भाषाप्रेमीहरू माझ हामीलाई यो पुस्तक प्रस्तुत गर्ने अवसर प्रदान गर्नुहुने सबै विद्वान तथा सहृदयीहरूप्रति हामी कृतज्ञता प्रकट गर्छौं । यस क्रममा हामी सर्वप्रथम स्वर्गीय कमलमणि दीक्षितप्रति हार्दिक श्रद्धाञ्जलि अर्पण गर्दै यो पुस्तक अस्तित्वमा ल्याउनका निम्ति उहाँले गर्नुभएको बौद्धिक, नैतिक र आर्थिक योगदानका निम्ति आभार प्रकट गर्दछौं । पुस्तकका लेखक एवं भाषाकर्मी शरच्चन्द्र वस्तीप्रति हामी अनुगृहीत छौं । उहाँले *शिक्षक* को आग्रह स्वीकार गरी किताब तयार पार्न करीब तीन वर्षसम्म गर्नुभएको कठोर परिश्रमको हामी हार्दिक प्रशंसा गर्छौं र त्यसरी मिहिनेत गरेको किताबको प्रकाशनको जिम्मेवारी समेत हामीलाई दिएकोमा धन्यवाद दिन्छौं । यस पुस्तकको तयारीमा कामसिंह चेपाङ, विपेन्द्र घिमिरे, धर्मराज दाहाल र खड्गबहादुर मगरको पर्याप्त श्रम परेको छ । त्यसनिम्ति उहाँहरू सबै धन्यवादका पात्र हुनुहुन्छ । पुस्तकको आवरणका निम्ति खर्च भएको मूल्यवान समय र श्रमका निम्ति रविन सायूमिलाई विशेष धन्यवाद !

पाठकहरूको सुझावका आधारमा आगामी दिनमा पुस्तकलाई अझै सरल र उपयोगी बनाउन प्रयास गर्नेछौं । धन्यवाद !

२०७४ साउन
जावलाखेल, ललितपुर

**राजेन्द्र दाहाल**
सम्पादक, *शिक्षक* मासिक

# प्राक्कथन

नेपाली भाषा हाम्रो पहिचान हो। यसको आफ्नै सौन्दर्य, विशेषता र व्यक्तित्व छ। हामीले यसलाई प्रेम गर्नुपर्छ र सम्मान पनि। सहज-स्वाभाविक गतिमा अघि बढ्न दिनुपर्छ। अवैज्ञानिक नियमहरूले बाटो छेक्न हुँदैन; विवेकहीन लहडबाजीले गति बिथोल्न हुँदैन। कुनै पनि बहानामा खुम्च्याउने, संकीर्ण बनाउने र कमजोर पार्ने प्रयास गर्न हुँदैन। यति मात्र गर्न सक्यौं भने यो आफैं फक्रँदै, विकसित हुँदै जानेछ। त्यो क्षमता, त्यो शक्ति र त्यो सामर्थ्य यससँग पर्याप्त छ।

तर, केही समय यता नेपाली भाषा अराजकताको शिकार बन्दै गएको छ। सहीलाई गलत र गलतलाई सही भन्दै यसको हुर्मत लिन थालिएको छ। कहिले दीर्घ जति हटाएर ह्रस्व मात्र लेख्न त कहिले श-ष हटाएर स मात्र र व हटाएर ब मात्र लेख्न आदेश दिइन्छ। कहिले संयुक्त अक्षरलाई खुट्टा काटेर लेख्न उर्दी जारी गरिन्छ। कहिले वर्णविन्यासका नाममा वर्णविनाश गर्ने त कहिले भाषामा रहेका महत्त्वपूर्ण ध्वनिहरू नामेट पार्ने योजना अघि बढाइन्छ। कहिले भने नेपाली वाङ्मयलाई गरिमा र उँचाइ दिने आजसम्मका लेखक-साहित्यकारहरूले जे लेखे, त्यसलाई गलत ठहर गर्दै सच्याउने नाममा कुरूप एवं विकृत बनाउने अभियान चलाइन्छ। जिन्दगीभरि नेपालीमा कलम चलाउँदै आएका मनीषीहरूलाई रातारात नेपाली लेख्न नजान्ने कित्तामा धकेलिन्छ। शासकीय दम्भ र बलमिच्याइका साथ चलाइएको यस कुचक्रले नेपाली भाषालाई अस्थिर, संकीर्ण, कमजोर, क्षतविक्षत एवं विवादग्रस्त बनाउँदै लगेको छ।

यस अराजकताले आम नेपाली प्रयोगकर्तालाई अन्योलको भुमरीमा पारेको छ। के ठीक-के बेठीक भन्ने छुट्याउन र नेपाली कसरी लेख्ने भनेर ठम्याउन कठिन बनाएको छ। यो पुस्तक यसै सन्दर्भमा तयार पारिएको हो। गल्ती र विकृतिबाट मुक्त रहँदै आत्मविश्वाससाथ नेपाली लेख्न सघाउ पुऱ्याउनु यसको उद्देश्य हो। नेपाली लेखनलाई बिथोलिन र कमजोर हुन नदिन यसले बल पुऱ्याउनेछ।

पुस्तक तयार पार्ने क्रममा विभिन्न पत्रपत्रिका र नवप्रकाशित कृतिहरूको अध्ययन गर्दा अनौठो अनुभव भयो। १० वर्ष अघि *'हाम्रो भाषा'* पुस्तकमा मैले औंल्याएका त्रुटि र कमजोरीहरूको रजाइँ भाषामा आज पनि उसैगरी चलिरहेको रहेछ। त्यसको छनक शब्द, वाक्य र शैली सम्बन्धी खण्डमा पाइनेछ। (*'हाम्रो भाषा'* शब्दप्रयोगमा केन्द्रित छ भने यस पुस्तकले हिज्जेमा विशेष ध्यान दिएको छ।) पुस्तकको अन्त्यमा, उपर्युक्त सामग्रीहरूबाट संकलित प्रायः गलत हिज्जे लेखिने शब्दहरूको सूची दिइएको छ, जसलाई भाषा-साधक चूडामणि गौतमले विशेष आग्रहका साथ आफ्ना तीन पुस्तकहरूमा (१. *गौतम व्यावहारिक नेपाली शब्दकोश*, २. *नेपाली शुद्धाशुद्धि ज्ञान*, ३. *विवादित वर्णविन्यासको नेपाली शब्दकोश*) साभार समावेश गरिसक्नुभएको छ। सही हिज्जे लेख्न बाटो देखाउने नियम नेपाली भाषाका महागुरुहरू र उत्कृष्ट प्रयोगकर्ताहरूले तयार पारेको 'नेकशुले-२०६९' मा आधारित छ।

अन्त्यमा, यो पुस्तक लेख्न उत्प्रेरित गर्ने अप्रतिम भाषासेवी कमलमणि दीक्षित र भाषाप्रेमी राजेन्द्र दाहालप्रति हार्दिक अहोभाव व्यक्त गर्दछु। पुस्तकको पाण्डुलिपि प्रेमपूर्वक अध्ययन गरी विभिन्न सुझाव दिने सर्वश्री रोचक घिमिरे, गोविन्दराज भट्टराई, वसन्त थापा, केदार शर्मा, मोहन मैनाली र पारसप्रकाश नेपालप्रति हृदयतः आभारी छु। साजसज्जाका निम्ति कामसिंह चेपाङ तथा विपेन्द्र घिमिरेलाई साधुवाद।

**शरच्चन्द्र वस्ती**

भानु जयन्ती, २०७४

# विषय सूची

# नेपाली कसरी लेख्ने ?

नेपाली हाम्रो भाषा हो । नेपालभित्र र बाहिरका सबै नेपालीको साझा भाषा । आपसमा संवाद गर्न हामीलाई नेपाली भाषा नै चाहिन्छ । हाम्रो स्वाभाविक, प्राकृतिक अभिव्यक्ति नेपाली भाषामै हुन्छ । नेपालीमै लेखेर मात्र हामी नेपालीको मन छुन सक्छौं, बढीभन्दा बढी नेपालीसम्म पुग्न सक्छौं । त्यसैले नेपाली ठीकसँग लेख्न जान्नु जरूरी छ ।

प्रश्न उठ्छ, नेपाली कसरी लेख्ने ? जवाफ सजिलो छ– जसरी बोलिन्छ, त्यसरी । हामी भन्छौं– *म पुस्तक पढ्छु । भाइ खेल्न नपाएर ठुस्केको छ । आफू पास भएको सुनेर बहिनी खुशीले नाची* । यसैगरी लेख्ने । शब्दको क्रम नबिगार्ने । सबैले बुझ्ने, प्रचलित, सजिला शब्द प्रयोग गर्ने । एउटा वाक्यमा एउटा कुरा मात्र भन्ने । धेरै कुरा जोडेर वाक्य लामो नपार्ने । आफूलाई लागेको कुरा साथीलाई भनिरहेको छु भन्ठानेर लेख्ने । यसो गर्दा लेख्न सजिलो हुन्छ । लेखाइ सरल र स्वाभाविक हुन्छ । यसरी लेखेको धेरैले बुझ्छन् । त्यसले धेरैको मन छुन्छ । अनि के चाहियो ?

कुनै पनि भाषा लेख्ता वा बोल्दा मूलतः दुई कुरामा ध्यान दिनुपर्छ– शब्द र वाक्य । हरेक शब्दको निश्चित अर्थ हुन्छ । त्यसैले आफूले प्रयोग गर्न लागेको शब्दको अर्थ के हो भन्नेबारे सबैभन्दा पहिले आफैं स्पष्ट हुनुपर्छ । अर्थ नै राम्ररी नबुझी शब्द प्रयोग गर्न हुँदैन । त्यसो गरियो भने कुरो बिग्रन्छ । शब्दको अर्थ थाहा छैन भने शब्दकोश हेर्ने गर्नुपर्छ । शब्दको प्रयोगमा प्रायः कस्ता खालका असावधानी र गल्ती हुन्छन् अनि तिनलाई कसरी सुधार्न सकिन्छ भन्नेबारे 'शब्द' खण्डमा बताइएको छ ।

शब्दहरू मिलेर वाक्यको निर्माण हुन्छ । शब्दको अर्थ अवश्य हुन्छ तर वाक्यको अंग नबनेसम्म त्यो सक्रिय हुँदैन । 'चरो' मात्रैको पनि अर्थ छ, परन्तु त्यो निष्क्रिय छ । वाक्यमा उनिएपछि मात्र त्यसले भूमिका पाउँछ र सक्रिय हुन्छ । त्यो उड्न सक्छ, बस्न सक्छ, खस्न सक्छ, देखिन सक्छ, चिरबिराउन सक्छ, आउन वा जान सक्छ, राम्रो वा नराम्रो हुन सक्छ, भेटिन सक्छ, हराउन सक्छ, मर्न वा मारिन सक्छ । शब्दलाई सामान्यतः नाम, सर्वनाम, विशेषण, अव्यय र क्रियाका रूपमा वर्गीकरण गर्ने गरिएको छ । विभक्ति आदिले तिनीहरूबीच सम्बन्ध कायम गर्छन् । क्रियाले वाक्यको मियोका रूपमा काम गर्छ; त्यसलाई केन्द्र बनाएर शब्दहरूले आआफ्नो भूमिका सम्हाल्छन् । भावना, कल्पना, विचार, विश्लेषण, सूचना– सबैको अभिव्यक्ति वाक्यबाटै हुन्छ । वाक्यमा प्रायः के-कस्ता कमजोरी हुन्छन् र तिनलाई कसरी सुधार्ने भन्नेबारे 'वाक्य' खण्डमा स्पष्ट पारिएको छ । यसै मेसोमा अनुच्छेदबारे पनि चर्चा गरिएको छ ।

बोलेको शब्द सुनिन्छ भने लेखेको शब्द देखिन्छ, र पढिन्छ । लेखिने शब्दको निश्चित ढाँचा हुन्छ जसलाई हिज्जे भन्छन् । त्यस ढाँचाले शब्दको दृश्य रूप र व्यक्तित्व प्रकट गर्छ । हिज्जे बिग्रियो भने शब्दको व्यक्तित्व बिग्रन्छ र त्यो विरूप हुन्छ । त्यसको अर्थ, आशय र प्रभाव फरक पर्छ । श-स, इकार-उकार र अन्य हिज्जे फरक पर्दा कसरी अनर्थ हुन्छ भन्नेबारे शुरूमै 'हिज्जे' खण्डमा ध्यानाकर्षण गरिएको छ । विभिन्न कारणवश नेपाली हिज्जेको भद्रगोल बढ्दै गएकाले सही हिज्जे के हो भन्नेबारे अलमल नपरोस् भनेर हिज्जे सम्बन्धी सरल नियम पनि दिइएको छ। साथै, पुस्तकको अन्त्यमा, प्रायः गलत हिज्जे लेखिने २७ सय शब्द र तिनको शुद्ध रूपको सूची समावेश गरिएको छ । त्यहींनिर छुट्टै 'शब्दानुशासन' खण्ड छ, जसले नेपाली व्याकरणका आधारभूत कुराहरू सरल एवं संक्षिप्त रूपमा जान्न वा आफ्नै पूर्वज्ञानको स्मरण किंवा सिंहावलोकन गर्न जिज्ञासुहरूलाई सघाउनेछ ।

हामीले प्रयोग गर्ने शब्द शुद्ध त हुनैपर्छ, वाक्यमा त्यसको अर्थ र आशय ठीकसँग खुलेको पनि हुनुपर्छ । सँगसँगै लेखाइमा नेपालीपन, नेपाली पारा समेत झल्किनुपर्छ । हिजोआज हाम्रो भाषामा कृत्रिमता थपिँदै गएको छ जसले यसलाई बोधो, भद्दा र बिरानो बनाउँदै लगेको छ। 'मादक पदार्थ सेवन गरेर सवारी साधन सञ्चालन नगरौं' मा सबै शब्द नेपालीकै छन्, वाक्य र व्याकरण पनि मिलेकै छ तर यसमा नेपाली पारा छैन। त्यसैले यो बोधो, भद्दा र निष्प्राण छ। दिमागमा ठोकिन्छ तर मनसम्म पुग्दैन; पराईले पराईलाई भनेजस्तो लाग्छ। यसको सट्टा 'जाँडरक्सी खाएर गाडी नहाँक्नोस्' भन्ने हो भने त्यो तिक्खर, झरिलो र जीवन्त हुन्छ अनि सहजै मनसम्म पुग्छ । आफन्तले भनेजस्तो लाग्छ । किन भने यसमा नेपालीपन खुलेको छ, नेपाली पारा झल्केको छ । हाम्रा वाक्य सरल, सहज र नेपाली पाराका हुन थालेपछि मात्र स्वादिला हुन्छन्; नेपाली मनमा बस्न र नेपाली जिब्रामा झुन्डिन थाल्छन् । त्यसवेला हाम्रो भाषाको रौनक नै अर्को हुनेछ। 'शैली' खण्डका साथै विभिन्न उपशीर्षकमा यसबारे ध्यानाकर्षण गरिएको छ।

भाषा भनेपछि व्याकरणका सूत्र र नियम सिकाउने चलन छ, हामीकहाँ। यसमा त्यसो गरिएको छैन। न पारिभाषिक शब्दहरूले तर्साइएको छ, न त *कर्ता एकवचन हुँदा क्रिया पनि एकवचन हुन्छ* जस्ता पाठहरू नै पढाइएको छ । यो पुस्तक त्यो बोझ र त्यो टाउकोदुखाइबाट मुक्त छ । यसमा त हामीले पढ्ने-लेख्ने गरेको नेपाली कस्तो छ र त्यसलाई कसरी राम्रो, मीठो, छरितो, तेजिलो बनाउन सकिन्छ भन्ने कुरा उदाहरण मार्फत देखाइएको छ, सम्झाइएको छ। सामान्यतः ख्याल नगरिने तर ख्याल गरेपछि देख्न र देखेपछि निराकरण गर्न सकिने कमजोरीहरूबारे छलफल गरिएको छ। यो आफूले आफैंलाई हेर्न, आफ्ना गुणदोष थाहा पाउन र आफ्नो लेखाइ आफैं सुधार्न सघाउने पुस्तक हो। भाषाप्रति संवेदनशीलता जगाउनु र बाटो देखाउनु यसको अभीष्ट हो। भाषाको बाटोमा तपाईं आफैं हिंड्नुपर्छ। पुस्तकले यस यात्रालाई रमाइलो, रोमाञ्चक र आनन्ददायी बनाउन सघाउनेछ।

*इदमन्धतमः कृत्स्नं जायेत भुवनत्रयम् ।*
*यदि शब्दाह्वयं ज्योतिरासंसारं न दीप्यते ।।*

(शब्दरूपी ज्योतिले संसारलाई प्रकाशित नगर्ने हो भने
यो तीनै लोक अन्धकारको डल्लोमा परिणत हुनेछ ।)

**–दण्डी** *(काव्यादर्श १।४)*



*भाषा हो सभ्यता हाम्रो, सारा उदय उन्नति ।*
*जीत वैभव भाषामै बाँच्तछन् पछिसम्म यी ।।*

**–बालकृष्ण सम** *(मुकुन्द इन्दिरा)*

# हिज्जे

भाषा शब्दहरूबाट बन्छ। शब्द अक्षरहरूबाट बन्छन्। प्रत्येक शब्दमा अक्षर र मात्राहरू निश्चित क्रम र रूपमा रहेका हुन्छन्। यसैलाई हिज्जे भनिन्छ। कुन शब्द कसरी लेख्ने भनेर परम्परादेखि चलिआएको सर्वस्वीकृत प्रचलन नै हिज्जे हो।

लेख्ने क्रममा सर्वप्रथम शब्दको हिज्जे शुद्ध र सही होस् भनेर ध्यान पुऱ्याउनुपर्छ। लापरवाही गर्न हुँदैन। हिज्जे ठीक भएपछि मात्र शब्दको स्वरूप ठीक हुन्छ। शब्दको स्वरूप ठीक भएपछि मात्र लेखाइ ठीक हुन सक्छ।

हिज्जे नमिल्दा शब्दको अर्थमा आकाश-पातालको फरक पर्छ। *फूल* ले 'पुष्प' बुझाउँछ, *फुल* ले 'अन्डा'। सत्यनारायणको पूजामा *फूल* चढाइन्छ, अमलेट बनाउन *फुल* खोजिन्छ। *पीस जोन* को अर्थ 'शान्तिक्षेत्र' हुन्छ तर *पिस जोन* ले 'पिशाब फेर्ने ठाउँ' लाई जनाउँछ। 'पूर्व *दिशा* तिर फर्केर नमस्कार गर' भन्नुपर्ने ठाउँमा 'पूर्व *दिसा* तिर' लेखियो भने कस्तो होला ?

हिज्जे नमिल्दा अर्थ फरक पर्ने केही उदाहरण :

### *नेपाली जाति : कति जाती !*

- *जाति* ले जातजातिलाई बुझाउँछ; *जाती* ले असल स्वभावको, भलोलाई।
  - कैलालीमा थारू *जातीको* बसोबास छ। (हुनुपर्छ– *जातिको*)
  - माइली दिदी सारै *जाति* हुनुहुन्छ। (लेख्नुपर्छ– सारै *जाती*)

- *चिर* को अर्थ लामो समयसम्म रहने हो, *चीर* को अर्थ कपडा।
  - सच्चा समाजसेवीको नाम *चीरकाल* सम्म अमर रहन्छ। (हुनुपर्छ– *चिरकाल* सम्म)
  - कौरवको सभामा द्रौपदीको *चिर* हरण भयो। (लेख्नुपर्छ– *चीर* हरण)
- *तिर* को अर्थ तर्फ हो, *तीर* भनेको नदी/खोलाको किनारा वा वाण।
  - भीर *तीर* नजाऊ, लडौला। (हुनुपर्छ– भीर *तिर*)
  - इन्द्रावतीको *तिर* मा पिकनिक जाने भयौं। (लेख्नुपर्छ– *तीर* मा)
  - एक *तिर* ले दुई शिकार। (भन्नुपर्छ– *तीर* ले)।
- *तालि* को अर्थ पटक हो, *ताली* ले थपडीलाई बुझाउँछ।
  - मैले दोस्रो *तालीमा* बल्ल एसएलसी पास गरें। (हुनुपर्छ– दोस्रो *तालिमा*)
  - भाषण सकिनासाथ सबैले *तालि* बजाए। (लेख्नुपर्छ– *ताली*)
- *खालि* को अर्थ केवल हुन्छ, *खाली* को अर्थ रित्तो।
  - रामेश्वर *खाली* हल्ला गरिरहन्छ। (हुनुपर्छ– *खालि*)
  - त्यस दिन कक्षा कोठा *खालि* थियो। (लेख्नुपर्छ– *खाली*)
- *दिन* भनेको दिवस हो, *दीन* भनेको दरिद्र/दयनीय।
  - चार *दीन* सम्म राजु भैरहवामै बस्यो। (हुनुपर्छ– चार *दिन* सम्म)
  - *दिन*-दुःखीलाई दया गर। (लेख्नुपर्छ– *दीन*-दुःखीलाई)

## जम्मै कि उब्रेको ?

- खाएर उब्रिएको जूठो वस्तु *पुरा* हो, जम्मै/सम्पन्न लाई *पूरा* भन्छन्।
  - कैयौं दिन उसले जूठो-*पूरा* मा गुजारा गऱ्यो। (हुनुपर्छ– *जूठो-पुरा*)
  - भाइले होमवर्क एक घण्टामै *पुरा* गऱ्यो। (लेख्नुपर्छ– *पूरा* गऱ्यो)
- *कुल* ले वंश वा खानदानलाई मात्र बुझाउँदैन, 'जम्मा' भन्ने पनि बुझाउँछ।
  - जुत्ता, पाइन्ट, शर्ट र कोट किन्न *कूल* १२ हजार रुपैयाँ खर्च भयो। (लेख्नुपर्छ– *कुल* १२ हजार रुपैयाँ)

- *उनी* शब्द सर्वनाम हो, ऊनबाट बनेकोलाई *ऊनी* भन्छन् ।
  - *ऊनी* कहिल्यै रिसाउँदिनन् । (भन्नुपर्छ– *उनी*)
  - *उनी* गलैंचा निकै महँगो हुन्छ । (लेख्नुपर्छ– *ऊनी* गलैंचा)
- मैले सरस्वती मातालाई चढाउन *फुल* किनें ।

  बुझिहाल्नुभयो होला, सरस्वती मातालाई *फुल* (अन्डा) चढाइँदैन, *फूल* (पुष्प) मात्र चढाइन्छ । अनि *फुल* लेखेर भयो त ?

### *शायर : सजीव कि निर्जीव ?*

- *सायर* भनेको कपडाको बार हो, कविलाई चाहिं *शायर* भनिन्छ ।
  - तीन जना *सायर* ले गजल सुनाए । (लेख्नुपर्छ– *शायर* ले)
- *सहर* भनेको एक जातको माछो हो, *नगर* लाई *शहर* भनिन्छ ।
  - काठमाडौं मन्दिरको *सहर* हो । (लेख्नुपर्छ– *शहर*)
- मातलाई *नशा* भन्छन्, रक्तवाहिनी नाडीलाई *नसा* ।
  - भाङ्को शर्बत पिएपछि सबैलाई *नसा* लाग्यो । (भन्नुपर्छ– *नशा*)
  - *नशा-नशा* मा तातो रगत बग्छ । (लेख्नुपर्छ– *नसा-नसा* मा)
- *शाला* भनेको घर हो, *साला* ले पत्नीको भाइलाई बुझाउँछ ।
  - मेरो गाउँमा एउटै *पाठसाला* छैन । (भन्नुपर्छ– *पाठशाला*)
  - *शाला* ले भिनाजुलाई धोखा दिएछ । (लेख्नुपर्छ– *साला* ले)
- *कोश* को अर्थ ढुकुटी हो; अर्थसहित शब्दहरू भण्डारण गरिएको ग्रन्थलाई पनि *कोश* भनिन्छ । *कोस* को अर्थ चाहिं आँखाको दुवैतिरको कुनो भन्ने हुन्छ; दुई माइल लम्बाइलाई पनि *कोस* भन्छन् ।
  - राज्यको *कोस* खाली छ । (लेख्नुपर्छ– *कोश*)
  - दुवै आँखाका *कोश* आँसुले भिजेका थिए । (भन्नुपर्छ– *कोस*)
- *शेर* सिंहलाई भन्छन्, *सेर* चार पाउ वजनलाई ।

  अब आफैं भन्नुहोस्, *शेरबहादुर* र *सेरबहादुर* को अर्थमा कति फरक रहेछ ?
- *शव* भनेको *लाश* हो, *सब* भनेको *सारा/सम्पूर्ण* ।

– *शवलाई* नदीमा बगाइदेऊ। अर्थात् *लाशलाई* बगाइदेऊ।
– *सबलाई* नदीमा बगाइदेऊ। अर्थात् *सबै जनालाई* बगाइदेऊ।

## *ङिच्च गर्ने पार्क*

अंग्रेजीबाट नेपालीमा आएर चलेका शब्दहरूमा पनि ह्रस्व-दीर्घ र श-स को पूरापूर ख्याल गर्नुपर्छ। नत्र एक थोक भन्न खोज्दा अर्कै अर्थ लाग्छ र लेखाइ हास्यास्पद हुन पुग्छ। जस्तै :

- *सिन* को अर्थ पाप हो, *सीन* को अर्थ 'दृश्य'। त्यसैले 'मैले क्या राम्रो *सिन* देखें' लेखियो भने सुन्दर दृश्य होइन, 'गजबको पाप देखें' भन्ने अर्थ लाग्छ। दृश्यलाई *सीन* नै लेख्नुपर्छ।
- *ग्रिन* को अर्थ ङिच्च गर्नु हो, *ग्रीन* को अर्थ 'हरियो'। त्यसैले 'हरियो पार्क' भन्नुपर्दा *ग्रीन पार्क* नै भन्नुपर्छ। *ग्रिन पार्क* भन्दा त 'ङिच्च गर्ने पार्क' भन्ने अर्थ लाग्छ।
- *लिभ* को अर्थ बाँच्नु हो, *लीभ* को अर्थ बिदा। त्यसैले 'लामो बिदा' भन्नुपर्दा *लङ लीभ* नै भन्नुपर्छ, *लङ लिभ* भनेर हुँदैन।
- *पुल* भनेको तान्नु हो, *पूल* भनेको दह वा पोखरी। त्यसैले *स्विमिङ पूल* नै लेख्नुपर्छ, *स्विमिङ पुल* लेखेर हुँदैन।
- *फुल* को अर्थ भरी/भरिएको हुन्छ भने *फूल* को अर्थ हो– मूर्ख/बुद्धिहीन। त्यसैले *अप्रिल फूल* नै लेख्नुपर्छ; *अप्रिल फुल* लेख्नु आफैंलाई मूर्ख (फूल) घोषित गरे सरह हुन्छ।
- *सेभिङ* को अर्थ बचाउनु हो, *शेभिङ* को अर्थ खौरिनु वा दारी काट्नु। त्यसैले दारी काट्ने सिलसिलामा लगाउने क्रीमलाई *शेभिङ क्रीम* नै लेख्नुपर्छ। पातलो *स* राखेर *सेभिङ क्रीम* भन्दा 'बचाउने क्रीम' भन्ने अर्थ लाग्छ।
- *सिट* को अर्थ बस्नु हो भने *शीट* को अर्थ कागजको पत्र वा पाना। त्यसैले 'लब्धांकपत्र' लाई *मार्कशीट* नै भन्नुपर्छ। *मार्कसिट* ले त्यो अर्थ बुझाउँदैन।

- *शेक्सपियर* विश्वविख्यात नाटककारको नाम हो । त्यसको *श* लाई बिगारेर *सेक्सपियर* लेखिदिंदा 'यौन-जोडा' भन्ने अर्थ लाग्न सक्छ। हिज्जे बिगारेर यस्तो खालका अनर्थ किन निम्त्याउने ?

## *भीमसेनको काँधमा गधा ?*

अरू किसिमको हिज्जेमा पनि पर्याप्त ध्यान दिनुपर्छ। नत्र कुरा गडबड हुन्छ। जस्तै :

- भीमसेनले आफ्नो काँधबाट *गधा* उठाएर दुर्योधनमाथि प्रहार गरे।
  *गधा* होइन, *गदा*। *गधा* एक खालको चारखुट्टे जनावरलाई भन्छन्। *गदा* चाहिं एक प्रकारको शस्त्र हो।
- *गाडा* अन्धकारमा मैले राधालाई ठम्याउन सकिनँ।
  *गाडा* होइन, *गाढा*। *गाडा* भनेको गोरू, राँगो, मान्छे आदिले तान्ने गाडी हो। *गाढा* भनेको चाहिं बाक्लो/अतिशय हो।
- पाँचै जना दाजुभाइ आमाको *कृया* मा बसेका थिए।
  *कृया* होइन, *किरिया*।
- रक्सी खाएपछि के गर्न हुन्छ र के गर्न हुँदैन भन्ने *शुद्धि* बाँकी रहँदैन।
  *शुद्धि* होइन, *सुद्धी*। *शुद्धि* भनेको शुद्धता, पवित्रता वा चोख्याउने काम हो। *सुद्धी* चाहिं चेतना, होश वा ज्ञानलाई भन्छन्।
- *धन्य*, पास भइछस् !
  *धन्य* होइन *धन्न*। *धन्य* को अर्थ प्रशंसालायक भन्ने हो। *धन्न* चाहिं खुशी वा व्यंग्यमा प्रकट गरिने उद्‌गार हो।

## झुक्किएला नि !

उस्तैउस्तै लाग्ने शब्दले कहिलेकाहीं झुक्याउँछन् र लेखाइ अशुद्ध हुन पुग्छ। त्यसैले, एउटा शब्द एक किसिमले लेखिएको देखेर उस्तै त होला नि भन्दै अर्को शब्द पनि त्यसैगरी लेख्न हुँदैन। प्रत्येक शब्दको हिज्जेमा ध्यान दिनुपर्छ।

❑ मुलुकमा भ्रष्टाचार *अत्याधिक* बढेको छ।

*अत्याचार* शब्द त हुन्छ तर त्यसको सिको गरेर *अत्याधिक* लेख्न मिल्दैन। *अत्यधिक* लेख्नुपर्छ। यसैगरी :

– *दुराचार* त हुन्छ तर दुरावस्था हुँदैन; *दुरवस्था* लेख्नुपर्छ।
– *सम्पूर्ण* त शुद्ध हो तर निपूर्ण अशुद्ध; *निपुण* लेख्नुपर्छ।
– *अस्वस्थ* त ठीक हो तर विश्वस्थ हुँदैन; *विश्वस्त* लेख्नुपर्छ।
– *वर्गाधार* त हुन्छ, तर कर्णाधार हुँदैन; *कर्णधार* लेख्नुपर्छ।
– *मद्दत* त ठीक हो तर उद्दत बेठीक; *उद्यत* लेख्नुपर्छ।
– *दुःखसाथ* त हुन्छ तर आत्मसाथ हुँदैन; *आत्मसात्* लेख्नुपर्छ।
– *भावार्द्र* त ठीक हो तर सौहार्द्र बेठीक; *सौहार्द* लेख्नुपर्छ।
– *इष्ट/अनिष्ट* त शुद्ध हो तर वरिष्ट/कनिष्ट अशुद्ध; *वरिष्ठ/कनिष्ठ* लेख्नुपर्छ।
– *हल्ला/पल्ला* त ठीक हो तर तल्ला/खुल्ला बेठीक; *तला/खुला* लेख्नुपर्छ।
– *मातृसंस्था* शब्द त शुद्ध हो तर भातृसंस्था अशुद्ध; *भ्रातृसंस्था* लेख्नुपर्छ।
– *अनावश्यक* त हुन्छ तर अनाधिकार/अनाधिकृत हुँदैन; *अनधिकार/अनधिकृत* लेख्नुपर्छ।

## नचाहिंदो 'ता'

थुप्रै शब्द यस्ता छन्, जसमा 'ता' लगाइरहनुपर्दैन। 'ता' लगाएर जे अर्थ निकाल्न खोजिएको हो, त्यो अर्थ तिनले स्वतः बुझाइरहेका हुन्छन्। तैपनि झुक्किएर 'ता' लगाउने गरेको देखिन्छ। जस्तै :

❑ दुर्घटनामा खुट्टा भाँचिएपछि पनि उनमा *नैराश्यता* देखिएन।

*नैराश्यता* होइन, *नैराश्य* अथवा *निराशा*। यसैगरी :

*आतिथ्यता* होइन, *आतिथ्य*। *आधिक्यता* होइन, *आधिक्य* वा *अधिकता*। *औचित्यता* होइन, *औचित्य*। *ऐक्यता* होइन, *ऐक्य* वा

*एकता*। *कौशलता* होइन, *कौशल* वा *कुशलता*। *गाम्भीर्यता* होइन, *गाम्भीर्य* वा *गम्भीरता*। *गौरवता* होइन, *गौरव* वा *गुरुता*। *चातुर्यता* होइन, *चातुर्य* वा *चतुरता*। *तादात्म्यता* होइन, *तादात्म्य* वा *तदात्मता*। *दारिद्र्यता* होइन, *दारिद्र्य* वा *दरिद्रता*। *धैर्यता* होइन, *धैर्य* वा *धीरता*। *बाहुल्यता* होइन, *बाहुल्य* वा *बहुलता*। *माधुर्यता* होइन, *माधुर्य* वा *मधुरता*। *वात्सल्यता* होइन, *वात्सल्य* वा *वत्सलता*। *वैभवता* होइन, *वैभव*। *वैमनस्यता* होइन, *वैमनस्य*। *शैशवता* होइन, *शैशव* वा *शिशुता*। *सान्निध्यता* होइन, *सान्निध्य*। *सामञ्जस्यता* होइन, *सामञ्जस्य*। *सामर्थ्यता* होइन, *सामर्थ्य* वा *समर्थता*। *सामीप्यता* होइन, *सामीप्य* वा *समीपता*। *साम्यता* होइन, *साम्य* वा *समता*। *सौजन्यता* होइन, *सौजन्य* वा *सुजनता*। *सौन्दर्यता* होइन, *सौन्दर्य* वा *सुन्दरता*। *सौहार्दता* (वा *सौहार्द्र*) होइन, *सौहार्द*।

❑ रामले ठूलो *इमान्दारिता* देखायो।

कुरो उस्तै हो। यहाँ पनि *ता* लगाउनुपर्दैन। *इमानदारी* देखायो भने पुग्छ।

यसैगरी *जिम्मेदारिता, जवाफदेहिता, बफादारिता, साझेदारिता* जस्ता शब्द पनि बन्दैनन्। *जिम्मेदारी, जवाफदेही, बफादारी, साझेदारी* भने पुग्छ।

## कुन लेख्ने ?

कतिपय शब्दका दुई रूप हुन्छन्। दुवै शुद्ध हुन्छन्। ह्रस्व पनि शुद्ध हुन्छ, दीर्घ पनि। श पनि शुद्ध हुन्छ, स पनि। ब पनि शुद्ध हुन्छ, व पनि। पूरा अक्षर पनि शुद्ध हुन्छ, आधा अक्षर पनि। यस्ता शब्दमा बढी प्रचलित रूप जे छ, त्यही लेख्नु राम्रो हुन्छ। जस्तै :

| | |
|---|---|
| *अकास* | आकाश |
| *उपरान्त* | उप्रान्त |
| *गाण्डिव* | गाण्डीव |

| | |
|---|---|
| *राती* | राति |
| *अञ्जली* | अञ्जलि |
| *कैलास* | कैलाश |
| *युवति* | युवती |
| *बिन्दु* | विन्दु |
| चुनाब | चुनाव |

यिनमा दोस्रो रूप बढी प्रचलित छ। त्यही लेख्ने।

❑ *हरी* ले बजारमा *शम्भू* लाई भेट्यो।

*हरी* होइन, *हरि*। *शम्भू* होइन, *शम्भु*।

*हरी, शम्भू, साधू, राष्ट्रीय* जस्ता (दीर्घ) रूप हिन्दीमा प्रचलित छन्। तिनलाई हिन्दीकै निम्ति छोडिदिनु राम्रो। नेपालीमा *हरि, शम्भु, साधु, राष्ट्रिय* लेख्नुपर्छ। यी नै शुद्ध रूप हुन्।

– ऊसँग एउटा पनि *हथियार* थिएन।

*हथियार* पनि हिन्दी रूप हो। नेपालीमा *हतियार* लेख्नुपर्छ।

## ख्याल गरौं

शब्दको सही रूप के हो भन्ने सधैं ख्याल गर्नुपर्छ। ख्यालै नगरी कहीं कुनै अक्षर वा ह्रस्व-दीर्घ फेरिदिने त कहीं केही हटाइदिने वा थपिदिने गर्नुहुँदैन। जस्तै :

❑ ६० *मेघावाट* को नयाँ जलविद्युत आयोजना।

*मेघावाट* होइन, *मेगावाट*। एक हजार किलोवाट अथवा १० लाख 'वाट' बराबर एक मेगावाट हुन्छ।

❑ आज *स्कुस* को तर्कारी खाइयो।

बहिनीले कपडामा *स्त्री* गरी।

*स्कुस* होइन, *इस्कुस*। *स्त्री* होइन *इस्त्री*।

*स्कूल* लाई *इस्कूल, स्टील* लाई *इस्टील* लेख्नु त ठीक होइन। तर,

त्यसो भनेर *इस्टकोट* लाई *स्टकोट*, *इस्टिमेट* लाई *स्टिमेट*, *इस्पात* लाई *स्पात* र *एस्कर्टिङ* लाई *स्कर्टिङ* लेख्न हुँदैन।

❑ गरिमालाई *इतिहाँस* को राम्रो ज्ञान छ।

*इतिहाँस* होइन, *इतिहास*। यस्तै *आँकलन, हाँस्य, आँशुकवि* मा पनि चन्द्रविन्दु चाहिँदैन। *आकलन, हास्य, आशुकवि* लेख्नुपर्छ।

❑ हामी आफ्नो मागमा *अन्तीम* समयसम्म *अडीग* रह्यौं।

*अन्तीम* होइन, *अन्तिम*। *अडीग* होइन, *अडिग*।

– *अमूक* व्यक्तिको *अद्‌भूत* चमत्कार हेर्न ऊ *आतूर* थियो।

*अमूक* होइन, *अमुक*। *अद्‌भूत* होइन, *अद्‌भुत*। *आतूर* होइन, *आतुर*।

❑ प्रभाको *उर्जा* देखेर विभालाई सधैं *इर्ष्या* लाग्छ।

*उर्जा* होइन, *ऊर्जा*। *इर्ष्या* होइन, *ईर्ष्या*।

*(थाहा नपाएर, लापरवाही गरेर वा अलमलिएर गलत हिज्जे लेखिन्छ। प्रायः गलत हिज्जे लेखिने शब्दहरू र तिनको सही रूपको सूची 'हिज्जेको हेक्का' शीर्षकमा, पुस्तकको अन्त्यमा दिइएको छ।)*

## खुट्टा काट्ने, नकाट्ने

❑ शब्दको अन्त्यमा खुट्टा काटेको (हलन्त) उच्चारण गरे पनि सामान्यतः खुट्टा नकाटी लेख्ने चलन छ। जस्तै :

*रबिन, मनोहर, पहाड, मधेश, गणित, किताब* आदि।

यिनको उच्चारण *रबिन्, मनोहर्, पहाड्, मधेश्, गणित्, किताब्* गरिन्छ। तर लेख्ता खुट्टो नकाटी पूरै लेख्नुपर्छ।

– शब्दको अन्त्यमा जोडिएको (संयुक्त) अक्षर छ भने चाहिं उच्चारण पनि पूरै गरिन्छ (र, त्यसैगरी लेखिन्छ)। जस्तै :

*भक्त, वित्त, बुद्ध, सन्त, शब्द* आदि।

यिनलाई *भक्त्, वित्त्, बुद्ध्, सन्त्, शब्द्* उच्चारण गरिँदैन।

- क्रियापदमा जस्तो उच्चारण हुन्छ त्यस्तै लेखिन्छ । जस्तै– *गर्छन्, खान्छन्, भनिन्, खेलिन्* आदिमा हलन्त उच्चारण हुन्छ र लेख्ता पनि खुट्टो काटेरै लेखिन्छ । *गर्नेछ, खानेछ, भनेको छ, खेलेको छ* आदिमा पूरै उच्चारण हुन्छ र लेख्ता पनि खुट्टो काटिँदैन ।

## संयुक्त अक्षर

- *द्म, द्य, द्ध, द्व* जस्ता दुई व्यञ्जन मिलेर बनेका (संयुक्त) अक्षर हाम्रा सम्पत्ति हुन् । यिनको रूप नबिगारी ठीकसँग लेख्ने अभ्यास गर्नुपर्छ ।

  *पद्म, छद्म, गद्य, पद्य, विद्या, बुद्ध, वृद्ध, द्वारा, विद्वान* जस्ता शब्दमा यी अक्षर आउँछन् । यिनलाई *पद्‌म, छद्‌म, गद्‌य, पद्‌य, विद्‌या, बुद्‌ध, वृद्‌ध, द्‌वारा, विद्‌वान* बनाएर लेख्नु ठीक होइन । यसरी लेख्न थाल्ने हो भने क्रिया लाई *क्‌रिया,* नेत्र लाई *नेत्‌र,* प्रज्ञा लाई *प्‌रग्‌याँ,* सुरेन्द्र लाई *सुरेन्‌द्‌र* र मत्स्येन्द्रनाथ लाई *मत्‌स्‌येन्‌द्‌रनाथ* लेख्ने घनचक्करमा फसिन्छ । यसले नेपाली भाषाको अनुहार बिगार्छ । त्यसैले संयुक्त अक्षरलाई संयुक्त रूपमै लेख्नुपर्छ, भत्काउन हुँदैन ।

  शब्दका बीचमा आउने आधा अक्षरलाई खुट्टा काटेर लेख्नु नेपाली भाषाको शैली र प्रकृति दुवै होइन । अभै पर्दा अथवा अरू उपाय नहुँदा मात्र त्यसो गर्नु उचित हुन्छ ।

## खेलाँची होइन

हिज्जेसँग खेलाँची वा लहडबाजी गर्न हुँदैन । गलत हिज्जेले शब्दको अर्थ मात्र फरक पार्दैन, भाषालाई भित्रभित्रै खोक्रो र कमजोर समेत तुल्याउँदै लैजान्छ । त्यसैले शुद्ध र सही हिज्जे लेख्न एकदमै ध्यान पुऱ्याउनुपर्छ । अशुद्ध र गलत लेखेर को पो उँभो लाग्छ र ?

प्रस्तुत छन्, शुद्ध र सही हिज्जे लेख्न बाटो देखाउने सरल तर प्रभावकारी नियमहरू :

## हिज्जे : सामान्य नियम

### ■ शब्दको अन्त्यमा ह्रस्व लेख्ने

क. पुलिंगी शब्दहरू । जस्तै– हरि, मुरारि, विष्णु, शम्भु, बाबु, दाइ, भाइ, दाजु, नाति, पनाति, जुवाइँ आदि ।

ख. अप्राणिवाचक उकारान्त नपुंसकलिंगी शब्दहरू । जस्तै– घिउ, आलु, गाउँ, हिउँ आदि ।

ग. नु, आउ, आइ (कृत्) प्रत्यय र आइ, याइँ (तद्धित) प्रत्यय लागी बनेका शब्दहरू । जस्तै– बस्नु, खेल्नु, हिंड्नु, जनाउ, पढाइ, लेखाइ, गोलाइ, दुष्ट्याइँ आदि ।

घ. दुवै लिंगमा हुने उकारान्त विशेषण । जस्तै– दुधालु, घरेलु, मायालु, सिकारु आदि ।

ङ. सामान्य अव्यय । जस्तै– माथि, मुनि, पट्टि, चाहिं, बाजि, चोटि, खालि, अघि, पछि, बरु, अनि, पनि, भोलि, पर्सि, निम्ति, खेरि, छिः आदि ।

### ■ शब्दको अन्त्यमा दीर्घ लेख्ने

क. स्त्रीलिंगी शब्दहरू । जस्तै– लक्ष्मी, पार्वती, दिदी, बहिनी, छोरी, सासू, स्वास्नी, धोबिनी, पण्डित्नी, माइजू, भाउजू, गाई आदि ।

ख. अप्राणिवाचक ईकारान्त नपुंसकलिंगी शब्दहरू । जस्तै– कौसी, धुरी, क्वाँटी, खरानी, पानी, बानी, गाली, सिक्री, फर्सी, लप्सी, खैंजडी, हँस्यौली आदि ।

ग. मनुष्यको विशेष जात, पेशा, धर्म र भाषा बुझाउने शब्दहरू । जस्तै– लिम्बू, ज्यापू, धोबी, घर्ती, दमाईं, ठकुरी, सिकर्मी, हलुवाई, सिपाही, काजी, गुभाजू, हिन्दू, ईसाई, हिब्रू, उर्दू, जापानी, अंग्रेजी आदि ।

घ. ज्यू, जी प्रत्यय लागेर बनेका आदर जनाउने शब्दहरू । जस्तै–

मन्त्रीज्यू, सभापतिज्यू, पिताजी, शर्माजी, परियारजी, झाजी, लामाजी, इन्दिराजी, मोहनजी आदि ।

ङ. भाव, 'सम्बन्धी' र 'त्यहाँ हुने' अर्थ बुझाउने 'ई' तद्धित प्रत्यय लागी बनेका शब्दहरू । जस्तै– गरीबी, नोकरी, चाकरी, खुनी, बैगुनी, इलमी, नेपाली, अछामी, जंगली आदि ।

च. सर्वनामहरू । जस्तै– ऊ, ती, तिमी, हामी, यिनी, उनी, तिनी, आफू, कोही, केही, यही, त्यही, त्यहीं, कहीं आदि ।

छ. स्त्रीलिंगका र दुवै लिंगमा हुने ईकारान्त विशेषणहरू । जस्तै– काली, गोरी, राम्री, हँसिली, फरासिली, राजी, धनी, नामी, जाती, नजाती आदि ।

ज. 'अरी' प्रत्यय लागेका र यसको अर्थ दिने अव्ययहरू । जस्तै– राम्ररी, बेसरी, सुस्तरी, बराबरी; भकभकी, पटपटी, खलखली, ह्वालह्वाल्ती आदि ।

झ. विध्यर्थक क्रियापदको अन्त्यमा आउने उकार । जस्तै– गर्नू, जानू, खानू, गरूँ, जाऊँ, खाऊँ, भनूँ, देऊ, खाऊ, आऊ, लगाऊ, सिकाऊ, बचाऊ आदि ।

■ **अन्य**

क. विध्यर्थक क्रियापदको बीचमा आउने उकार ह्रस्व लेख्ने । जस्तै– गरुन्, जाउन्, आउन्, बचाउन्, पढुन्, लेखुन्, खेलुन्, भनुन् आदि ।

ख. संख्यावाचक शब्दमा आउने उकार ह्रस्व लेख्ने । जस्तै– उन्नाइस, उनन्तीस, उनन्चालीस, उनासी, एकाउन्न, बाउन्न आदि ।

ग. संख्यावाचक शब्दमा व्यञ्जनसँग आउने इकार (त्रि बाहेक) दीर्घ लेख्ने । जस्तै– बीस, तीस, चालीस, चौबीस, पच्चीस, बत्तीस, चौंतीस, छत्तीस आदि ।

– स्वर मात्र आउँदा भने इकार ह्रस्व लेख्ने । जस्तै– एक्काइस, बाइस, तेइस, अट्ठाइस आदि । अपवाद : दुई ।

**हिज्जे : विशेष ध्यान दिनुपर्ने नियम**

क. संस्कृतबाट जस्ताको तस्तै आएका शब्दहरू यथावत् लेख्ने । जस्तै– श्री, गणेश, शक्ति, भक्ति, कीर्ति, शीतल, रीति, नीति, समीप, शरीर, वीर, वर्षा, बुद्धि, वधू आदि ।

ख. अन्य भाषाबाट हाम्रो भाषामा जस्ताको तस्तै मिल्न आएका शब्दहरू इकार, उकार, शकार, वकार आदि नबिगारी शुद्ध रूपमा यथावत् लेख्ने । जस्तै :

- शुरूमा दीर्घ इकार आउने शब्दहरू । जस्तै– चीफ, जीप, चीट, टीम, टीभी, टीशर्ट, ठीक, डीन, फीचर, बीच, भीड, मीटिङ, रीट, सीट, स्टील, ग्रीन, हीटर आदि ।
- बीचमा दीर्घ इकार आउने शब्दहरू । जस्तै– अपील, करीब, कारीगर, खरीद, गरीब, जमीन, जागीर, तपसील, तस्वीर, तारीफ, तालीम, दलील, नजीर, नतीजा, नसीब, पनीर, मारपीट, रसीद, रईस, वकील, शहीद, बीबीसी, आईडी, आईफोन आदि ।
- शुरूमा दीर्घ उकार आउने शब्दहरू । जस्तै– खूबी, घूस, छूट, झूट, तूफान, फूटपाथ, फूटबल, बूट, भूल, भूटान, रूस, स्कूटर, स्कूल, लूट आदि ।
- बीचमा दीर्घ उकार आउने शब्दहरू । जस्तै– अटूट, कपूत, कसूर, कानून, कार्टून, जुलूस, देहरादून, नमूना, बावजूद, मजदूर, मजबूत, महसूस, सबूत आदि ।
- शुरूमा मोटो श आउने शब्दहरू । जस्तै– शर्त, शर्बत, शहर, शहीद, शान, शायद, शायर, शायरी, शिकार, शुरू, शेक्सपियर, शेखी, शेयर, शेर, शो, शोरूम आदि ।
- बीच र अन्त्यमा मोटो श आउने शब्दहरू । जस्तै– कुश्ती, कोशिश, खुशी, चश्मा, जोश, निशान, निशाना, पेश, पेशा, पेशी, पेश्की, एक्शन, नेशन, फेशन, कमिशन, पोशाक,

बेहोश, मशाल, मशीन, मार्कशीट, मालिश, मुश्किल, लाश, लोडशेडिङ, सिफारिश, होश, होशियार आदि ।

– बीचमा व आउने जवाफ, रवाफ जस्ता शब्दहरू ।

(विशेष ध्यानाकर्षण : अंग्रेजी शब्दमा रहेको/स्पष्ट उच्चारण गरिने श तथा ई, ऊ नबिगारी शुद्ध रूपमा लेख्ने। जस्तै– फेशन, स्टील, स्कूल आदि।)

ग. अन्य भाषाबाट रूप परिवर्तन भएर आएका प्रचलित शब्दहरू यथावत् लेख्ने । जस्तै– गाउँ, खेत, भुइँ, सास, नाक, कान, काम, घाम, छाता, अँगार, नाइके, रगत, जग्गा, फाइदा, काइदा, सोख, गोदाम, लाल्टिन, जर्नेल, अस्पताल आदि ।

घ. झर्रोवादी आन्दोलनबाट स्थापित शब्दहरू यथावत् लेख्ने । जस्तै– अखानो, अगावै, अडेसो, अहमत्याइँ, औतारी, कुइरे, कैरन, कोकोहोलो, कोसेढुंगो, कोसदुएक, पपाँच, गोडादशेक, खटनपटन, खुरुन्धार, खैराँती, गनौट, गज्मौरो, गलहत्ती, गान्टिनु, जमर्को, मथिंगल, घचारो, घुर्मैलो, अनजबाफ आदि ।

ङ. शुरूमा दीर्घ लेखिँदै आएका शब्दहरू नबिगारी यथावत् शुद्ध रूपमा लेख्ने । जस्तै– कीरो, खीर, चीसो, चूलो, जीउ, तीतो, नीम, पीठो, पीर, पीरो, भीड, मीठो, मीत, रीस, शीत, हीरा; बीस, तीस, चालीस; ठूलो, दूध, धूलो, पूरा, फूल, बूढो, मूला आदि ।

– साथै कोशी, दशैं, आकाश जस्ता मोटो श लेखिँदै आएका शब्दहरू यथावत् शुद्ध रूपमा लेख्ने ।

च. नेपाली प्रत्यय लगाउँदा मूल शब्दमा रहेका वर्णहरूलाई जबर्जस्ती नबिगारी शुद्ध रूपमा लेख्ने । जस्तै– कानूनी, गैरकानूनी, जोशिलो, पोषिलो, विश्वासिलो, विदेशिनु, खुशियाली, तुषारो, पुष्ट्याइँ, दुष्ट्याइँ, स्पष्ट्याउनु, वर्षिनु, स्वीकार्नु, पूर्वी, पूर्वेली, पश्चिमेली, एकवर्षे, दुईवर्षे, बेहोशी, होशियार आदि ।

अपवाद : पुजारी, चिनियाँ, रिसाहा, मितेरी, सिपालु, जुनेली, दुधिलो आदि ।

**■ पञ्चम वर्ण, शिरविन्दु, चन्द्रविन्दु**

क. संस्कृतबाट आएका तत्सम शब्दमा शिरविन्दुको सट्टा पञ्चम वर्ण लेख्ने । जस्तै– सञ्चार, सञ्चय, घण्टा, दण्ड, सन्त, सन्दर्भ, शम्भु, सम्पादक, सम्बोधन आदि ।

ख. अनुस्वार पछि क वर्ग (क, ख, ग, घ, ङ) रहेको अवस्थामा भने शिरविन्दु लेख्ने । जस्तै– अंक, अहंकार, शंका, शंख, गंगा, संघ, संगठन आदि ।

ग. य देखि ह सम्मका वर्ण (य, र, ल, व, श, ष, स, ह) भन्दा पहिले शिरविन्दु मात्र लेख्ने । जस्तै– संयम, संलग्न, संवाद, संवाददाता, संवत्, संविधान, संशय, संस्कृत, संस्कार, सिंह, संहार आदि ।

घ. अन्य भाषाबाट आएका, तद्भव र झर्रा शब्दमा शिरविन्दु नदिने; उच्चारण वा तिनको प्रकृति अनुरूप पञ्चम वर्ण नै लेख्ने । जस्तै– हम्किनु, चम्किलो, लम्किनु, चम्चा, गम्छा, सम्धी, सन्चो, लन्डन, टेन्डर आदि । (कांग्रेस, अंग्रेजी जस्ता शब्दमा भने शिरविन्दु नै लेख्ने ।)

ङ. डिकोभन्दा माथि मात्रा वा रेफ नभएको स्थितिमा चन्द्रविन्दु लेख्ने । जस्तै– तँ, कहाँ, यहाँ, गएँ, खाएँ, दायाँ, बायाँ आदि ।

च. डिकोभन्दा माथि मात्रा वा रेफ भएको स्थितिमा भने चन्द्रविन्दुको सट्टा शिरविन्दु लेख्ने । जस्तै– भनें, गरें, बैंस, दशैं, सधैं, झोंक, ढोंग, मानौं, हजारौं, गर्छौं, झार्छौं, कहीं, त्यहीं, हिंड्नु, गिंड्नु, तपाईं, फर्कंदा, झर्कंदा आदि ।

छ. ठाउँ, थर आदिको अन्त्यमा ङ्ग वा ङ्ग होइन, ङ नै लेख्ने । जस्तै– दाङ, ताप्लेजुङ, दार्जीलिङ, गुरुङ, तामाङ, सुरुङ आदि ।

– अंग्रेजीमा ing आएको ठाउँमा पनि ङ्ग होइन, ङ नै लेख्ने । जस्तै– टीचिङ, ट्रेनिङ, ड्राइभिङ, जम्पिङ आदि ।

**■ धातुमा त र द**

क. सामान्य वर्तमान काल (करण) र भूतकाल (अभ्यस्त) मा धातु

पछि त अथवा द नजोडी लेख्ने। जस्तै– पाक्छ, जाँच्छ, हाँस्छ, राख्छ, बाँच्छ; माग्छ, हान्छ, बोल्छ, बुझ्छ, रम्छ, भन्छ; पाक्थ्यो, जाँच्थ्यो, हाँस्थ्यो, माग्थ्यो, हान्थ्यो, बोल्थ्यो आदि। (यस्ता ठाउँमा त अथवा द जोडेर लेख्ने पनि चलन छ। जस्तै– पाक्तछ/पाक्दछ, हाँस्तछ/हाँस्दछ; माग्दछ, बोल्दछ आदि। तर त/द नजोडी लेख्ता नै छरितो हुन्छ।)

ख. धातुको अन्त्यमा वर्गको प्रथम वा द्वितीय अक्षर (क्, च्, ट्, त्, प्, ख्, छ्, ठ्, थ्, फ्) वा स् रहेको छ भने, अकरण/अपूर्णता आदिमा त जोडेर लेख्ने। जस्तै– पाक्तैन, पाक्तैछ, पाक्तैथियो, जाँच्तैन, जाँच्तैछ, जाँच्तैथियो, हाँस्तैन, हाँस्तैछ, हाँस्तैथियो आदि।

ग. धातुको अन्त्यमा अन्य अक्षर रहँदा भने (अकरण/अपूर्णता आदिमा) द जोडेर लेख्ने। जस्तै– माग्दैन, माग्दैछ, माग्दैथियो, हान्दैन, हान्दैछ, हान्दैथियो, बोल्दैन, बोल्दैछ, बोल्दैथियो आदि।

## ■ अंक र मिति

क. एउटा अंक भएको संख्या अक्षरमा लेख्ने। जस्तै– एक, दुई, तीन, चार, पाँच, छ, सात, आठ, नौ।

ख. दुई वा तीन अंक भएको संख्या अंकमा लेख्ने। जस्तै– २५। ८८। १४०। ५६८। ८५६ आदि।

ग. हजार र त्यसभन्दा माथिको संख्या जनाउनुपर्दा अक्षरमा लेख्ने। जस्तै– १२ हजार। २० लाख। ११ करोड। ४० अर्ब आदि।
– २४,३५,२८,२५६ नलेख्ने। २४ करोड ३५ लाख २८ हजार २५६ लेख्ने।

घ. उमेर, मिति, कक्षा, रोल नं. र वडा नं. आदिका लागि अंक लेख्ने। जस्तै– १२ वर्षीय, २२ गते, कक्षा ८, रोल नं. १८, विराटनगर- ४ आदि।

ङ. मिति लेख्ता समयको ठूलो परिधिबाट क्रमशः सानोतिर लाग्ने । जस्तै– २०६९-२-१८ । २०६९ जेठ १८ गते ।

■ **पदयोग, पदवियोग**

हिज्जे जस्तै पदयोग, पदवियोगको पनि पूरापूर ख्याल गर्नुपर्छ । विभक्ति सधैं शब्दसँग जोडेर लेखिन्छन् भने अरू शब्द जोड्न जरूरी छैन । समास भएर बनेको शब्द सामान्यतः एउटै डिकोमा लेख्नुपर्ने हो । तर, समास भए पनि लामो हुने भयो भने शब्द नजोडी लेख्ने नेपाली भाषाको प्रकृति रहेको छ । त्यसैले, अर्थमा फरक पर्दैन भने जोड्ने भन्दा छुट्याउनेतिर लाग्नु उपयुक्त हुन्छ ।

क. समस्त शब्दहरू सामान्यतः एउटै डिकोमा लेख्ने । जस्तै– दाजुभाइ, दिदीबहिनी, घटीबढी, छात्रावास, शुभकामना, गाईगोठ, नीलकण्ठ, पीताम्बर, गोडधुवा, लामपुच्छ्रे, रक्षामन्त्री आदि ।

ख. समास भएपछि पाँच अक्षरभन्दा बढी हुने स्थिति भएमा शब्दहरू छुट्याएर लेख्ने । जस्तै– शिष्ट परम्परा, परराष्ट्र मन्त्री, प्रधान न्यायाधीश, इतिहास शिरोमणि, महालेखा परीक्षक, परराष्ट्र मन्त्रालय, अध्ययन संस्थान आदि ।

- व्यक्ति/संस्था/पद/स्थान आदिलाई बुझाउने शब्द भने अभ्यास वा प्रचलन अनुरूप यथावत् लेख्ने । जस्तै– भवानीप्रसाद, कृष्णचन्द्रसिंह, विश्वविद्यालय, महाविद्यालय, महान्यायाधिवक्ता, काभ्रेपलान्चोक, विराटनगर आदि ।

ग. उपसर्ग सधैं जोडेर लेख्ने । जस्तै– विवाद, अनुवाद, अपवाद, प्रतिवाद, उपयोग, सहयोग, अनुहार, अधिकार, बेइज्जत आदि ।

घ. एउटा काम जनाउने संयुक्त क्रियापद एउटै डिकोमा लेख्ने । जस्तै– भनिसक्यो, गरिदियो, सुतिहाल्यो, आइपुग्यो, आइपुग्छ, खाइहेर्छ, जानुपर्छ, जानेछ, आएछ, गरेछ, गएथ्यो, गर्थ्यो, बस्थी, भन्नुभयो, गर्नुभयो आदि ।

ङ. छुट्टाछुट्टै काम जनाउँदा क्रियापद छुट्याएर लेख्ने । जस्तै– भनी दियो (भनेर दियो), बाँगिई हेर्‍यो (बाँगिएर हेर्‍यो), खाई सुत्यो (खाएर सुत्यो); गरेको छ, भनेको छ, खाएको थियो, आएको थियो आदि ।

च. विभक्तिहरू (ले, लाई, द्वारा, बाट, देखि, को, का, की, मा आदि) शब्दसँग एउटै डिकोमा लेख्ने । जस्तै– सोनामले, सोनामलाई, बेखाद्वारा, बेखाबाट, घरदेखि, डोल्माको, डोल्माका, डोल्माकी, घरमा आदि ।

छ. विभक्ति जस्तै भएर आउने नामयोगीहरू (मुनि, माथि, बारे, भन्दा, सँग, वारि, पारि, भित्र, बाहिर, तिर, सित, तर्फ, सम्म आदि) जोडेर लेख्ने । जस्तै– पुलमुनि, पुलमाथि, पुस्तकबारे, श्यामभन्दा, रामसँग, खोलावारि, खोलापारि, घरसम्म आदि ।

ज. उपर्युक्त बाहेक सबै नामयोगी र निपातहरू (विना, बाहेक, समेत, अगाडि, पछाडि, सिवाय, मार्फत, समक्ष, अनुसार, अनुरूप, बराबर, लगायत, मुताबिक, बमोजिम, अन्तर्गत, वटा, जना, जस्तै, समान, झैं, नै, नि, पो, त, लौ, चाहिं, मात्र आदि) छुट्याएर लेख्ने । जस्तै– पुस्तकालय विना, टेलिभिजन बाहेक, विनीता समेत, गुरु बराबर, विभाग अन्तर्गत, चार वटा, आठ जना, गुलाफ जस्तो, राम झैं, कलम चाहिं, झोला मात्र आदि ।

झ. शब्दको संक्षिप्त रूप लेख्ता अक्षरहरूका बीचमा थोप्लो नदिई जोडेर लेख्ने । जस्तै– त्रिवि, गाविस, जिविस, एसएलसी, टीभी, सीडी, बीबीसी आदि ।

ञ. अनुकरणात्मक शब्दहरू जोडेर लेख्ने । जस्तै– टहटह, ढकमक्क, खलखली, चाइँचुइँ, च्याउँच्याउँ, क्याउँक्याउँ, जर्‍याकजुरुक, मर्‍याकमुरुक, गल्र्यामगुर्लुम आदि ।

# शब्द

भन्न खोजेको कुरा बुझाउन सही शब्दको प्रयोग अत्यावश्यक हुन्छ। शब्द ठीक नभएसम्म लेखाइ आकर्षक र प्रभावकारी हुन सक्तैन। गलत शब्दको प्रयोगले कुरा बिग्रन्छ र अर्थको अनर्थ हुन्छ। त्यसैले, शब्दको अर्थ राम्ररी बुझेर सधैं शुद्ध र सही शब्दको प्रयोग गर्नुपर्छ।

**नाम**

❑ *ज्योतिष* ले चिना हेरेर भविष्यवाणी गरे।

*ज्योतिष* ले होइन, *ज्योतिषी* ले। *ज्योतिष* भनेको विद्या हो, व्यक्ति होइन। ज्योतिष पढेको अथवा ज्योतिष जान्नेलाई *ज्योतिषी* भन्छन्।

❑ मामा प्रत्येक बिहिवार *बंगलामुखी* को दर्शन गर्नुहुन्छ।

देवीको नाम *बगलामुखी* हो, *बंगलामुखी* होइन। *बंगला* त एक खालको घरलाई पो भन्छन्।

❑ म व्यापार गरेर चाँडै *संवृद्ध* हुन चाहन्थें।

*संवृद्ध* होइन, *समृद्ध*। *समृद्ध* अर्थात् प्रशस्त धनसम्पत्ति भएको। *संवृद्ध* शब्दबाट त राम्ररी बढेको भन्ने अर्थ निस्कन्छ।

– जीवनमा सुख, *संवृद्धि* प्राप्त गर्ने कसको इच्छा हुँदैन ?

कुरा उही हो। *संवृद्धि* होइन, *समृद्धि* लेख्नु उचित हुन्छ।

❑ शहीदको *बलिदानी* लाई सबैले सम्मान गर्नुपर्छ।

*बलिदानी* होइन, *बलिदान* लाई। *बलिदानी* त बलिदान गर्ने व्यक्तिलाई भन्छन्। (शहीद भनेकै 'बलिदानी' हो।)

– एउटा खेलमा सबैभन्दा बढी गोल गर्ने *कीर्तिमानी* उनकै नाउँमा छ।

कुरा उस्तै हो। *कीर्तिमानी* को अर्थ हो– कीर्तिमान कायम गर्ने व्यक्ति। त्यसैले यहाँ भन्नुपर्छ– ...कीर्तिमान उनकै नाउँमा छ।

❑ पुराना मठ-मन्दिरको *मर्मतसंहार* गर्नुपर्छ।

*संहार* भनेको नाश हो। त्यसैले लेख्नुपर्छ– पुराना मठ-मन्दिरको *मर्मतसम्भार* गर्नुपर्छ। *सम्भार* अर्थात् बिग्रिन नदिई सम्हालेर राख्ने काम।

❑ उसले खासाबाट जुत्ता *निर्यात* गरेर काठमाडौंमा बेच्न थाल्यो।

*निर्यात* होइन, *आयात* गरेर। विदेशबाट मालसामान झिकाउने कामलाई *आयात* वा पैठारी भनिन्छ। मालसामान विदेश पठाउने कामलाई चाहिं *निर्यात* वा निकासी।

❑ त्यस उद्योगबाट दुई हजार *जनसंख्या* ले रोजगारी पाएका छन्।

*जनसंख्या* शब्दले *जनता* लाई होइन, जनताको *संख्या* लाई मात्र बुझाउँछ। संख्या भनेको निर्जीव कुरा हो। त्यसैले यस्ता ठाउँमा सीधै *जनताले* अथवा *जनाले* भन्नुपर्छ।

❑ छात्रावासमा *धूम्रपान* गर्न निषेध छ।

*धूम्रपान* होइन, *धूमपान*। धूवाँलाई *धूम* भनिन्छ। *धूम्र* को अर्थ हो– ध्वाँसो। त्यसैले चुरोट, बिंडी आदि पिउने कामलाई *धूमपान* भन्नुपर्छ।

❑ लुम्बिनी भ्रमणमा जाँदा हाम्रो *टोलीको संख्या* ४० थियो।

यस वाक्यबाट त *टोली नै ४० वटा* थिए भन्ने अर्थ लाग्छ। सही अर्थ बुझाउन भन्नुपर्छ– ... हाम्रो *टोली ४० जनाको* थियो। अथवा, हाम्रो *टोलीमा ४० जना* थिए।

❑ हामीलाई एउटा फूटबलको *आवश्यक* थियो।

भन्नुपर्छ– ...*आवश्यकता* थियो। अथवा, हामीलाई एउटा फूटबल चाहिएको थियो।

- साँझ-बिहान गुच्चा खेल्नु सानेको *दैनिकी* बनेको छ।

  गलत । *दैनिकी* भनेको डायरी हो, जसमा दिनभरिका कुरा लेखिन्छ। त्यसैले यस्ता ठाउँमा *दैनिकी* को सट्टा *दिनचर्या* भन्नुपर्छ।

- साथी फेल भएपछि मीनालाई निकै *खेद* लाग्यो।

  *खेद* होइन, *दुःख* लाग्यो । *नराम्रो* लाग्यो । *खेद* भनेको एक खालको पछुतो हो। अथवा, अरूले नराम्रो व्यवहार गर्दा पनि *खेद* व्यक्त गरिन्छ।

- सानीको परीक्षाफल बिग्रने *आशा* थियो।

  कुरो मिलेन। *आशा* सकारात्मक अर्थ दिने शब्द हो। परीक्षाफल सप्रने आशा हुन्छ, बिग्रने डर वा *आशंका* हुन्छ। भन्नुपर्छ– सानीको परीक्षाफल बिग्रने *डर/आशंका* थियो।

- रिक्साबाट लड्दा दिनेशको हात भाँचियो। त्यही *अवसर* मा उसको पैसा पनि चोरिएछ।

  कुरो उस्तै हो । *अवसर* पनि सकारात्मक अर्थ दिने शब्द हो । जस्तै : *ऊ तीन वर्ष पछि घर फर्केको थियो, त्यही अवसरमा उसको बिहा भयो*। यहाँ भन्नुपर्छ–... त्यही *वेला* उसको पैसा पनि चोरिएछ।

- बम्पर उपहार पाउनेको नाम चिट्ठा हालेर *निष्कासन* गरियो।

  *निष्कासन* चाहिं नकारात्मक भाव दिने शब्द हो । जस्तै : *आर्थिक हिनामिना गरेपछि उसलाई संस्थाबाट निष्कासन गरियो*। यहाँ भन्नुपर्छ– ...नाम चिट्ठा हालेर *निकालियो*।

- काकाले जाली कागज बनाएर आफूलाई फसाएको हरिबहादुरको *दाबी* छ।

  *दाबी* होइन, *आरोप*। अरूले खराब काम गरे बापत लगाइने दोषलाई *आरोप* भन्छन्। *दाबी* चाहिं कुनै वस्तु वा काममा आफ्नो हक अथवा स्वामित्व छ भनेर गरिने जिकिर हो। जस्तै : *बाबुबाट आफूले पनि अंश पाउनुपर्ने सीताको दाबी छ।*

- देशले गरीबीको समस्याबाट *निदान* पाउनुपर्छ।

*निदान* होइन, *मुक्ति* । *निदान* त *मूल कारण* अथवा *त्यस्तो कारण पत्ता लगाउने काम* लाई भनिन्छ ।

त्यसैले, *रोगको निदान भयो* भन्दा 'रोगको उपचार भयो' भन्ने अर्थ लाग्दैन । रोगको कारण पत्ता लाग्यो भन्ने मात्र बुझिन्छ ।

- ❑ निःशुल्क शिक्षा राष्ट्रिय बहसको *मुद्दा* बन्न पुग्यो ।

  *मुद्दा* होइन, *विषय* । *मुद्दा* त *मुकदमा* लाई भन्छन् ।

  – गरीबी निवारण देशको मुख्य *मुद्दा* हो ।

  कुरो मिलेन । मुख्य *चुनौती* हो भन्नु राम्रो ।

- ❑ हिजो *आजगनी* बाट तीन घर खरानी भए ।

  *आगजनी* होइन, *आगलागी* ।

  *आगजनी* को अर्थ हो– आगो लगाउने काम । कसैले खराब नियतवश घरमा आगो लगाइदिएको हो भने मात्र *आगजनी* भन्न मिल्छ । अचानक आगो लाग्न पुग्नुलाई चाहिं *आगलागी* भन्छन् ।

## सर्वनाम

- ❑ म संगीतकार होइन तर *त्यसमा* मेरो रुचि छ ।

  *रुचि केमा*– संगीतमा कि संगीतकारमा ? यस वाक्यले त संगीतकारमा रुचि छ भन्ने बुझाउँछ । सही अर्थ बुझाउन सीधै भन्नुपर्छ– *तर संगीतमा मेरो रुचि छ* ।

- ❑ यो खबर सुनेर मामा सारै चिन्तित हुनुभयो । *त्यसबाट* म दुःखित भएँ ।

  *केबाट दुःखित*– खबरबाट कि मामा चिन्तित भएकोबाट ? खबरबाट दुःखित भएको भए *'त्यसबाट'* हटाउनुपर्छ र दोस्रो वाक्यमा यति मात्र भन्नुपर्छ– *म पनि दुःखित भएँ* ।

- ❑ हरि र दिनेश हिजो बुबालाई भेट्न आएका थिए । *उनले* भने– म राजीनामा दिन चाहन्छु ।

  *उनले* भनेको कसले– हरिले कि दिनेशले ? यहाँ पनि *सर्वनाम* (उनले) ले कुरो बुझाउन सकेको छैन । त्यसलाई हटाएर सीधै *नाम*

(हरिले/दिनेशले) नै लेख्नुपर्छ।

- बाँकेबाट एउटा प्रतिनिधिमण्डल काठमाडौं आएको थियो। *उनीहरूले* गृहमन्त्रीलाई भेटे।

प्रतिनिधिमण्डल *एउटा* भएपछि *उनीहरूले* भन्न मिल्दैन। *त्यसले गृहमन्त्रीलाई भेट्यो* भन्नुपर्छ।

- यस्तो काम त *कसैले पनि* गर्न सक्छ।

मिलेन। भन्नुपर्छ– ...*जसले पनि* गर्न सक्छ।

– यस्तो काम त *जसले पनि* गर्न सक्तैन।

झन् मिलेन। भन्नुपर्छ–... *कसैले पनि* गर्न सक्तैन।

ध्यान दिनुपर्ने कुरा : जसले पनि, जहाँ पनि, जो पनि, जे पनि, जहिले पनि जस्ता ('पनि' लाई पछि लगाएर आएका) 'ज' बाट शुरू हुने सर्वनाम सामान्यतः करण/सकारात्मक वाक्यमा प्रयोग हुन्छन्। यसैगरी कसैले पनि, कहीं पनि, कोही पनि, केही पनि, कहिल्यै पनि जस्ता ('पनि' लाई पछि लगाएर आएका) 'क' बाट शुरू हुने सर्वनाम अकरण/नकारात्मक वाक्यमा प्रयोग हुन्छन्। जस्तै : दीपक जहिले पनि घरमा भेटिन्छ, दिनेश कहिल्यै पनि घरमा भेटिंदैन।

- *त्यहीं* बास बसौंला, *जहाँ* पुगिएला।
  *त्यही* खाउँला, *जे* भेटिएला।
  उनीहरू *त्यहीं* गए, *जहाँ* गुरुले लैजानुभयो।

क्रम मिलेन। यस्ता ठाउँहरूमा सामान्यतः 'ज' बाट शुरू हुने सर्वनाम भएको 'उपवाक्य' पहिले राख्नु राम्रो हुन्छ। त्यसैले भन्नुपर्छ :

*जहाँ* पुगिएला, *त्यहीं* बास बसौंला।

*जे* भेटिएला, *त्यही* खाउँला।

गुरुले *जहाँ* लैजानुभयो, उनीहरू *त्यहीं* गए।

- परेवा *जसरी* उड्छ, कुखुरा *त्यस्तै* उड्न सक्तैन।

सर्वनामको 'जोडी' मिलेन। भन्नुपर्छ– ...कुखुरा *त्यसरी* उड्न सक्तैन।

– *जस्तो* कर्म गऱ्यो, *त्यसैगरी* फल पाइन्छ ।

कुरा उही हो । भन्नुपर्छ– ... *त्यस्तै* फल पाइन्छ ।

❑ म खाना खाएर निस्कँदा पनि बिरालो *जहाँको त्यहीँ* थियो ।

*जहाँको त्यहीँ* होइन, *जहाँको तहीँ* ।

– रामले पुस्तक *जस्ताको त्यस्तै* फर्काइदियो ।

*जस्ताको त्यस्तै* होइन, *जस्ताको तस्तै* । उखानै छ नि– जस्तालाई तस्तै, ढिंडालाई निस्तै ।

## विशेषण

❑ दश वर्षमै ऊ *असंख्य* धनी भयो ।

*असंख्य* होइन, *अथाह* । *असंख्य* भनेको 'गन्ती गर्न नसकिने' हो । *अथाह* को अर्थ हुन्छ– कति हो भनेर थाहा पाउनै गाह्रो पर्ने/असाध्य धेरै ।

❑ इन्दिरा मेरी *सहोदर* काकी हुन् ।

श्रेया राजेशकी *सहोदर* भाउजू हुन् ।

रघु र म *सहोदर* मामा-भान्जा हौं ।

मिलेन । एउटै आमाको पेटबाट जन्मेकाहरू मात्र *सहोदर* हुन्छन् । बाबु एउटै भए पनि सौतेनी आमाबाट जन्मेकालाई समेत सहोदर भनिँदैन । काका-काकी, देवर-भाउजू, मामा-माइजू, भान्जा-भान्जी आदिलाई निकटता जनाउनुपर्दा *साक्खै* भन्नु राम्रो हुन्छ ।

❑ त्यस दिन बुबालाई भेट्न म *अधैर्य* थिएँ ।

एक छिन पर्ख, *अधैर्य* नहोऊ ।

*अधैर्य* होइन, *अधीर* । धैर्यहीनलाई *अधीर* भन्छन् । *अधैर्य* को अर्थ हो– धैर्यको अभाव ।

❑ अनिलको कुरा सुन्दा म ज्यादै *आश्चर्य* भएँ ।

*आश्चर्य* भएँ होइन, *आश्चर्यचकित* भएँ अथवा छक्क परें । *आश्चर्य* भनेको त मनमा उठ्ने एक खालको भाव वा *उदेक* मात्र हो ।

- सोनाम २३ वर्षमै क्याम्पस प्रमुख भएको सुन्दा जो पनि *अचम्मित* हुन्थ्यो ।

  *अचम्मित* शब्द नै बन्दैन । त्यसैले भन्नुपर्छ– ...जसलाई पनि *अचम्म* लाग्थ्यो/जो पनि *छक्क* पर्थ्यो ।

- उनको *निश्चल* अनुहार म कहिल्यै बिर्सन सक्तिनँ ।

  *निश्चल* होइन, *निश्छल* । हलचल नगर्ने, स्थिरलाई *निश्चल* भन्छन् । *निश्छल* को अर्थ हो– छलकपट नभएको, छलछामविहीन ।

- चोरीको आरोपमा प्रहरीले एक जनालाई पक्राउ गरेको थियो । तर *आरोपी* ले आफूलाई निर्दोष बतायो ।

  *आरोपी* होइन, *आरोपित* । जसमाथि आरोप लगाइएको छ त्यो *आरोपित* हो ।

- उहाँले विद्यालयमा २५ वर्ष *अवच्छिन्न* सेवा गर्नुभयो ।

  *अवच्छिन्न* होइन, *अविच्छिन्न* । बीचबीचमा छुटेकोलाई *अवच्छिन्न* भन्छन् । *अविच्छिन्न* को अर्थ हो– अटूट । बीचबीचमा नटुटेको ।

- फुपूको घर फेला नपरेर म आधा घण्टा *अलपत्र* परें ।

  मिलेन । *अलपत्र* पर्नु भनेको ठहर न ठेगान हुन पुग्नु हो । आधा घण्टा वा दुई-चार घण्टा अलमलिनु/भौंतारिनुलाई *अलपत्र* परेको भनिँदैन । यहाँ भन्नुपर्छ– ... म आधा घण्टा *अलमलिएँ* ।

- बडो *खुशियाली* वातावरणमा होली खेलियो ।

  *खुशियाली* शब्द नाम हो, जसको अर्थ हुन्छ– खुशी भएको अवस्था; हर्षबढाइँ । त्यसलाई विशेषणका रूपमा प्रयोग गर्न मिल्दैन । भन्नुपर्छ– बडो *खुशीको वातावरणमा...* । 'खुशियालीपूर्ण वातावरणमा' पनि भन्न सकिन्छ ।

- गर्मीको बिदा सकिएपछि क्याम्पस *सुचारु* भएको छ ।

  *सुचारु* शब्दको अर्थ हो– ज्यादै राम्रो, ज्यादै सुन्दर । खुल्नु अथवा चालू हुनुसँग यस शब्दको कुनै सम्बन्ध छैन । यहाँ भन्नुपर्छ–

क्याम्पस खुलेको छ। क्याम्पसमा पढाइ शुरू भएको छ।

- ❑ वातावरण *मैत्री* विकास मात्र दिगो हुन्छ।

अपांग *मैत्री* छात्रावास निर्माण गरिनुपर्छ।

*मैत्री* होइन, *अनुकूल*।

*मैत्री* शब्दको अर्थ हो– *मित्रता* । यहाँ भन्न खोजिएको चाहिं *मित्रतापूर्ण/मैत्रीपूर्ण* हो। सामान्यतः *अनुकूल* ले त्यो भाव समेट्छ।

यस्ता ठाउँमा दुप्लुक्किने *मैत्री* शब्द अंग्रेजी *फ्रेन्डली* को गैवारे अनुवाद हो। *फ्रेन्डली* को अर्थ हुन्छ– *मैत्रीपूर्ण/मित्रतापूर्ण*। जस्तै- मैत्रीपूर्ण खेल (फ्रेन्डली म्याच)। *मैत्री* भनेको *फ्रेन्डशिप* मात्र हो।

- ❑ *मृतात्मा* को चिरशान्तिको कामना।

*आत्मा* मर्दैन। त्यसैले *मृतात्मा* भन्नु ठीक होइन। यसको सट्टा *दिवंगत आत्मा* भन्न सकिन्छ (दिवंगत= स्वर्ग गएको)। अथवा, मृतकको नाम लिएर 'उहाँको आत्माको चिरशान्तिको कामना' भन्दा पनि हुन्छ।

- ❑ *दुर्घटनाग्रस्त स्थल*।

*दुर्घटनाग्रस्त* को अर्थ हो– *दुर्घटनामा परेको* । सडक छेउमा राखिने यस्तो सूचनाको अभिप्राय चाहिं 'यस ठाउँमा दुर्घटना हुन सक्छ' भनेर सतर्क गराउनु हो। त्यसैले *दुर्घटना हुन सक्ने ठाउँ* भन्नु राम्रो।

- ❑ *मदिराजन्य* पदार्थको बिक्री-वितरण रोकिनुपर्छ।

*मदिराजन्य* को अर्थ हुन्छ– मदिराबाट उत्पन्न हुने। मदिराबाट त मात र रोग बाहेक के उत्पन्न हुन्छ र ? वाक्यको आशय 'सबै किसिमका रक्सी/मदिराको बेचबिखन बन्द हुनुपर्छ' भन्ने हो। त्यसै भन्नु राम्रो। 'जाँडरक्सीको बेचबिखन रोकिनुपर्छ' भन्दा अझ मीठो र छरितो हुन्छ!

*जन्य* को अर्थ हो– *उत्पन्न हुने*।

यसको प्रयोग अर्थ बुझेर, होशियारीका साथ गर्नुपर्छ। *कृषिजन्य*

*वस्तु, युद्धजन्य* क्षति भन्नु त सही हुन्छ; तर *यौनजन्य हिंसा, कुकुरा-जन्य उद्योग* भन्नु गलत हुन्छ; *यौन हिंसा, कुकुरा उद्योग* भने पुग्छ।

❑ उनले आफ्नो अभिनय क्षमताको *अधिकतम* उपयोग गर्न सकेकी छैनन्।

*अधिकतम* होइन, *पर्याप्त*। अर्थात्, जति उपयोग गर्न सक्नुपर्थ्यो त्यति।

❑ बुद्धका *करुणामयी* आँखाहरूले अहिंसाको सन्देश दिन्छन्।

*आँखा* स्त्रीलिंगी शब्द होइन, त्यसैले त्यसको विशेषणलाई स्त्रीलिंगी बनाउन मिल्दैन। *करुणामय* आँखाहरू भन्नुपर्छ।

❑ वर्तमान शिक्षा प्रणालीमा *सुधार गर्न खाँचो* छ।

मिलेन। भन्नुपर्छ– *सुधारको खाँचो* छ। अथवा, *सुधार गर्न जरूरी/आवश्यक* छ।

❑ मन्त्रीज्यूले *एउटा* रातो गलबन्दी लगाउनुभएको थियो।
सचिवज्यू *एक* पजेरो चढेर पोखरा जानुभयो।

एकै पटक दुइटा गलबन्दी कसैले लगाउँदैन, न त एउटै मानिस दुइटा गाडी चढेर हिंड्न सक्छ। त्यसैले, अंग्रेजीको अ/एन (आर्टिकल) को पारामा आउने *एउटा/एक* शब्दको यस्ता वाक्यमा कुनै काम छैन।

❑ सभापति चढ्नुहुने गाडी सेतो छ।

चढ्नुहुने होइन, चढ्ने गाडी। चढ्नुहुने शब्द यहाँ गाडीको विशेषण बनेर आएको छ। गाडीलाई आदर गरेर 'तपाईं' भन्नुपर्दैन।

काकीले *खोल्नुभएको पसल*, काकाले *पाल्नुभएको गाई*, बुबाले *दिनुभएको पैसा*, आमा *चढ्नुभएको बस* जस्ता ठाउँमा पनि कुरा उस्तै हो। *खोलेको पसल/पालेको गाई/दिएको पैसा/चढेको बस* भन्नुपर्छ।

❑ हजुरआमा *दगुर्नुहुन* सक्नुहुन्न। बिहान *उठ्नुभएपछि* बिस्तारै मर्निङ-वाक गर्नुहुन्छ।

वाक्यको अन्त्यमा आउने क्रिया (क्रियापद) ले आदर जनाएको

छ भने त्यही आदर जनाउन वाक्यको बीचमा आउने क्रियालाई आदरार्थी बनाइरहनुपर्दैन।

यहाँ दुवै वाक्यमा क्रियापद (*सक्नुहुन्न/गर्नुहुन्छ*) ले नै आदर जनाएको छ। त्यसैले वाक्यका बीचमा आदर जनाउन *दगुर्नुहुन/उठ्नुभएपछि* भन्नुपर्दैन। *दगुर्न/उठेपछि* भने पुग्छ।

## अव्यय

- कर्णबहादुर गयो *तर* धनबहादुर *चाहिं* गएन।

  *तर* र *चाहिं* मध्ये एउटा मात्र राख्ने। जस्तै– कर्णबहादुर गयो, धनबहादुर *चाहिं* गएन। अथवा, कर्णबहादुर गयो *तर* धनबहादुर गएन।

  – विनीताले साइन्स पढी *तर* विनयले *भने* कमर्स पढ्यो।

  कुरा उही हो। *तर* र *भने* मध्ये एउटा मात्र राख्ने।

- मैले फोन गरें। तर *तत्काल* श्याम घरमा रहेनछ।

  *तत्काल* होइन, *त्यसवेला*। *तत्काल* को अर्थ *त्यसवेला* होइन, *त्यसैवेला/तुरुन्त/लगत्तै* हो।

- म तपाईंहरूको सुझाव *सहस्र* स्वीकार गर्छु।

  *सहस्र* होइन, *सहर्ष*। *सहर्ष* अर्थात् खुशीसाथ। *सहस्र* भनेको त 'हजार' हो।

- मलाई थाहा छ *कि* सुरेश अल्छी छ।

  मैले सुनें *कि* रन्जनाको बिहा भयो।

  यति धेरै खाएँ *कि* पेटै चर्कियो।

  आमाले भन्नुभयो *कि* छिटो हिंड्।

  *कि* को प्रयोगले यी वाक्यलाई भद्दा बनाइदिएको छ। यिनलाई यसरी लेख्नु राम्रो हुन्छ :

  – सुरेश अल्छी छ भन्ने मलाई थाहा छ।

  – रन्जनाको बिहा भयो रे।

  – पेट चर्किने गरी खाएँ।

– आमाले छिटो हिंड् भन्नुभयो ।

अंग्रेजीको *द्याट्* अथवा हिन्दीको *कि* जस्तो भएर आउने यसप्रकारको *कि* को प्रयोग सकेसम्म नगर्नु बेस ।

*कि* को प्रयोग अरू किसिमले पनि हुन्छ : क. प्रश्न वा अनुरोधका रूपमा; जस्तै– *भात खान्छौ कि ?* ख. विकल्पका रूपमा; जस्तै– *बसमा जाने कि ट्याक्सीमा ?* ग. तात्कालिक प्रतिफल जनाउन; जस्तै– *केही सोध्यो कि रिसाइहाल्छ ।* यस्ता प्रयोग भने मीठा र छरिता हुन्छन्; जति गरे पनि हुन्छ ।

❑ मैले भनेपछि उसले मान्यो *जबकि* ऊ कसैलाई टेर्दैनथ्यो ।

यो झन् भद्दा वाक्य हो । यसलाई दुई किसिमले लेख्न सकिन्छ :

– ऊ कसैलाई टेर्दैनथ्यो तर मैले भनेपछि मान्यो ।

– मैले भनेपछि उसले मान्यो, यद्यपि ऊ कसैलाई टेर्दैनथ्यो ।

*जबकि* को प्रयोग कहिल्यै पनि नगर्ने !

यसैगरी *बल्कि, ताकि, मानौंकि, हालाँकि* जस्ता शब्दको प्रयोग पनि कहिल्यै नगर्ने ।

❑ *जहाँसम्म हुन्छ,* भोलि नै फर्कन्छु ।

यो नेपाली शैलीको वाक्य भएन । भन्नुपर्छ– *सकेसम्म* भोलि नै फर्कन्छु ।

❑ *जब रमण आउँछ, म गइहाल्छु ।*

*जब खबर पाएँ, म हिंडिहालें ।*

कुरा उही हो । नेपाली पाराले यसरी लेख्नुपर्छ– रमण *आउनासाथ* म गइहाल्छु । खबर *पाउनासाथ* म हिंडिहालें ।

❑ शिक्षकहरूको भेला *हिजोदेखि* शुरू भयो ।

कार्यक्रम *सोमवारदेखि* प्रारम्भ हुनेछ ।

*हिजो शुरू भयो/ सोमवार प्रारम्भ हुनेछ* भन्दा पुग्छ ।

शुरू हुने काम एउटा क्षणमा मात्र हुन्छ र त्यो प्रक्रिया त्यही क्षणमा सकिई पनि हाल्छ । त्यसपछिका क्षणमा त शुरू भइसकेको काम

चलिरहने मात्र हो । त्यसैले यस्ता ठाउँमा *देखि* चाहिँदैन ।

- *हेटौँडादेखि नारायणघाट* ऊ बसमा गयो ।
  मैले *छात्रवृत्तिदेखि होस्टल* को सुविधा पाएँ ।

  यस्ता ठाउँमा *देखि* भनेपछि *सम्म* पनि चाहिन्छ । जस्तै– *हेटौँडादेखि नारायणघाटसम्म* ऊ बसमा गयो । मैले *छात्रवृत्तिदेखि होस्टलसम्म* को सुविधा पाएँ ।

- छोरी स्कूल *जान थाल्दा* आमा ज्यादै खुशी हुनुभएको छ ।

  *जान थाल्दा* होइन, *जान थालेपछि* ।

- *तीन महीनासम्म गरेको कसरतपछि* मनोहर दाइको तौल साढे पाँच किलो घट्यो ।

  *तीन महीनासम्म कसरत गरेपछि* भन्दा सरल र मीठो हुन्छ । '*छातीमा लगाएको भिक्सपछि* मलाई सन्चो भयो' कसैले भन्दैन । '*छातीमा भिक्स लगाएपछि...*' नै भन्छ । होइन र ?

## विभक्ति

- *गुरु* हामीलाई स्वयम्भू घुमाउन लैजानुभयो ।

  *ले* विभक्ति छुटेको छ । *गुरुले* भन्नुपर्छ । *गुरु हामीलाई लैजानुभयो* हुँदैन, *गुरुले हामीलाई लैजानुभयो* हुन्छ ।

- *पुष्पा* खुशी भएर साथीलाई मोबाइल दिई ।

  कुरा उस्तै हो । *पुष्पाले* भन्नुपर्छ ।

  वाक्य जति लामो भए पनि क्रियापदसँग कर्ताको सोझो सम्बन्ध हुन्छ । त्यसलाई ख्याल गरेर विभक्तिको प्रयोग गर्नुपर्छ ।

  यस वाक्यमा पुष्पा कर्ता हो र दिई क्रियापद । *पुष्पा... दिई* हुँदैन, *पुष्पाले दिई* नै भन्नुपर्छ ।

- शिक्षक, विद्यार्थी र अभिभावक मिलेर बाटो बनाए ।

  यस्ता वाक्यमा पनि कुरा उही हो । 'बाटो बनाए' सँग तालमेल मिलाउन *ले* राखेर *...अभिभावकले* भन्नुपर्छ ।

❑ *त्यस दिन ४० जना बढी* विद्यार्थी पिकनिक गएका थियौं ।

विभक्ति नभएर अनर्थ भएको छ । *४० जनाभन्दा बढी* भन्नुपर्छ ।

*४० जना बढी* मात्र भन्दा जति जना जानुपर्थ्यो त्यसभन्दा ४० जना बढी भन्ने अर्थ लाग्छ । त्यस्तो भन्न खोजिएको होइन ।

– मसित *पाँच रुपैयाँ बढी* पैसा थिएन ।

कुरो उस्तै हो । *पाँच रुपैयाँ बढी पैसा थिएन* को अर्थ हुन्छ– आफूलाई चाहिने जति पैसा त थियो तर त्यसभन्दा बढी पाँच रुपैयाँ थिएन । यहाँ चाहिं जम्माजम्मी पाँच रुपैयाँ मात्र थियो भन्न खोजिएको हो । त्यसका निम्ति विभक्ति राखेर *पाँच रुपैयाँभन्दा बढी* लेख्नैपर्छ ।

❑ हामीले *गुरुप्रति* सम्मान गर्नुपर्छ ।

*गुरुप्रति* होइन, *गुरुलाई* ।

❑ प्रधान अध्यापक *द्वारा* झण्डोत्तोलन गर्नुभयो ।

*द्वारा* होइन *ले* । 'प्रधान अध्यापकले झण्डोत्तोलन गर्नुभयो ।' *द्वारा* लगाउने भए लेख्नुपर्छ– प्रधान अध्यापकद्वारा झण्डोत्तोलन गरियो ।

❑ *हामीले* त्यो किताब पढेर खूब हाँस्यौं ।
*सीताले* मलाई देखेर लजाई ।
*पुष्पाले* साथीलाई मोबाइल दिएर हाँसी ।

यहाँ चाहिं *ले* विभक्ति चाहिंदैन । भन्नुपर्छ– *हामी* त्यो किताब पढेर खूब हाँस्यौं / *सीता* मलाई देखेर लजाई / *पुष्पा* साथीलाई मोबाइल दिएर हाँसी ।

❑ वैशाख १ गतेका *दिनमा* बिदा हुन्छ ।
त्यस *वेलामा* मसँग मोबाइल थिएन ।
पोखरा घुम्न जान *पाएमा* क्या रमाइलो हुन्थ्यो !

तीनवटै वाक्यमा *मा* विभक्तिको काम छैन । भन्नुपर्छ– *वैशाख १ गतेका दिन/त्यसवेला/पोखरा घुम्न जान पाए* ।

❑ ऐन-कानूनलाई पालना गर्नु हरेक नागरिकको दायित्व हो ।

यहाँ पनि *लाई* को काम छैन । *ऐन-कानून पालना गर्नु...* भने पुग्छ ।

– आफ्नो *ध्यानलाई* पढाइमा केन्द्रित गर ।
– *समस्यालाई* समाधान गर्न कसैले प्रयास गरेन ।
– जस्तै दुःखमा पनि *चित्तलाई* डगमग हुन नदेऊ ।
कुनै पनि वाक्यमा *लाई* चाहिँदैन ।

❑ ऊ *अलमल्लमा* पऱ्यो । म *अलपत्रमा* परें ।

यी वाक्यहरूमा *मा* को काम छैन । *अलमल्ल पऱ्यो/अलपत्र परें* मात्र लेख्ने ।

❑ *प्रत्येक विद्यार्थीहरूले यो कुरा बुझेका छन् ।*
*हरेक मानिसहरू सम्पत्ति कमाउन चाहन्छन् ।*

*प्रत्येक/हरेक* भनेको एक-एक हो । *'सबै'* होइन । त्यसैले यस्ता वाक्यमा क्रियापद एकवचन हुन्छ, बहुवचन हुँदैन । भन्नुपर्छ– प्रत्येक विद्यार्थीले यो कुरा बुझेको छ । हरेक मानिस सम्पत्ति कमाउन चाहन्छ ।

❑ ऱ्यालीमा हजारौं *जनताहरू* सहभागी भए ।
चार जना *विद्यार्थीहरूले* मात्र परीक्षा दिए ।

दुवै वाक्यमा *हरू* को काम छैन ।

एकभन्दा बढी/धेरै बुझाउन *हरू* चाहिने हो । वाक्यमा त्यो कुरा अरू शब्दबाटै स्पष्ट भइसकेको छ भने *हरू* लेखिरहनुपर्दैन ।

यहाँ पहिलो वाक्यमा *हजारौं* ले धेरै भन्ने अर्थ बुझाइसकेको छ भने दोस्रो वाक्यमा *चार जना* ले ।

## क्रिया

❑ राम पत्रकारिता *अध्ययन गर्दैछ ।*
भए जति पैसा हिजै *समाप्त भयो ।*

*अध्ययन गर्दैछ* होइन, *पढ्दैछ* । *समाप्त भयो* होइन, *सकियो* ।

सकेसम्म एउटै शब्दको क्रियापद प्रयोग गर्नु राम्रो हुन्छ । त्यसले वाक्यलाई छरितो र तेजिलो बनाउँछ ।

– सुनको भाउ अकस्मात् *कम भयो ।*

– उमा सरिताको कुरा *स्मरण गरिरहन्छे* ।

– दीपेश दिनदिनै *स्नान गर्छ* ।

कुरा उही हो । *कम भयो* होइन, *घट्यो* । *स्मरण गरिरहन्छे* होइन, *सम्झिरहन्छे* । *स्नान गर्छ* होइन, *नुहाउँछ* ।

❑ कक्षा कोठा सफा गरेपछि विद्यार्थीहरूले हात *धुने काम गरे* ।

एक शब्दको क्रियापदले भन्न सक्ने कुराका लागि तीन-तीन वटा शब्द !

*धुने काम गरे* होइन, धोए ।

❑ उनीहरूले चन्दा नदिए पसल *तोडफोड गर्नेछौं भनेका छन्* ।
क्याम्पस प्रमुखले एक हप्ता भित्र *माग पूरा गर्नेछु भन्नुभयो* ।

लेखाइ बोधो भएको छ । *तोडफोड गर्नेछौं भनेका छन्* होइन, *तोडफोड गर्ने धम्की दिएका छन्* भन्ने । *माग पूरा गर्नेछु* होइन, *माग पूरा गर्ने आश्वासन दिनुभयो* लेख्ने ।

❑ नयाँ शब्दकोश *प्रकाशनमा आएको छ* ।
सोनाम पढाइ छोडेर कतार गएको *सुन्नमा आयो* ।

भद्दा लेखाइ ! *प्रकाशनमा आएको छ* होइन, *छापिएको छ* भन्ने । *प्रकाशित भएको छ* पनि भन्न सकिन्छ । *सुन्नमा आयो* होइन, *सुनियो* लेख्ने ।

– उर्मिलाले एसएलसी पास गरेको *जानकारी हुन आयो* ।

– दशैंमा घर नजाने *सोच बनाएको छु* ।

उस्तै समस्या । *जानकारी हुन आयो* होइन, *थाहा पाइयो* भन्ने । *सोच बनाएको छु* होइन, *विचार गरेको छु* भन्ने ।

❑ विवाद समाधान गर्न सुनीलले राम्रो *भूमिका निभायो* ।

आगो पो निभाइन्छ, भूमिका कसरी निभाउने ? भन्नुपर्छ– *भूमिका खेल्यो* ।

❑ तेन्जिङले एक हप्तामै काम *सकायो* ।

*सकायो* होइन, *सक्यो* ।

*सकायो, सकाए, सकाई, सकायौ, सकाएँ, सकायौं* होइन, *सक्यो, सके, सकी, सक्यौ, सकें, सक्यौं* भन्नुपर्छ ।

- वार्षिकोत्सवमा प्रिन्सिपलद्वारा लामो *भाषण गरियो ।*
विद्यार्थीहरूबाट *जिमनास्टिक प्रदर्शन गरियो ।*

सकेसम्म कर्तृवाच्य (Active Voice) मा लेख्ने । त्यही सोझो र मीठो हुन्छ । भन्ने– ...प्रिन्सिपलले लामो *भाषण गर्नुभयो ।* विद्यार्थीहरूले *जिमनास्टिक प्रदर्शन गरे ।*

– पिकनिक जाने *निर्णय भयो ।*

– नयाँ ड्रेस नलगाउने *सल्लाह भयो ।*

कुरा उस्तै हो । कर्तृवाच्यमा यसरी लेख्ने– *हामीले* पिकनिक जाने *निर्णय गऱ्यौं ।* *उनीहरूले* नयाँ ड्रेस नलगाउने *सल्लाह गरे ।*

- क्लबले योग प्रशिक्षण *दिन थालिएको* छ ।
प्रमिलाले *राखिएको* प्रस्ताव साँच्चै राम्रो छ ।

भन्नुपर्छ– क्लबले योग प्रशिक्षण *दिन थालेको* छ । प्रमिलाले राखेको प्रस्ताव साँच्चै राम्रो छ ।

- बैंकद्वारा निकालेको सूचना उत्साहजनक छ ।
कर्मचारीहरूद्वारा गरेको माग जायज छैन ।

मिलेन । भन्नुपर्छ– बैंकद्वारा निकालिएको सूचना/ कर्मचारीहरूद्वारा गरिएको माग । अथवा– बैंकले निकालेको सूचना/कर्मचारीहरूले गरेको माग ।

# वाक्य

भाषा वाक्य मार्फत अघि बढ्छ । वाक्यमा उनिएपछि मात्र शब्दहरूले भूमिका पाउँछन् र ती सक्रिय हुन्छन् । स्पष्ट, सन्तुलित र अर्थपूर्ण वाक्यले अभिव्यक्तिलाई प्रभावकारी बनाउँछ । वाक्य बेढंगे, असन्तुलित र आफैंमा अलमलिएको नहोस् भनेर सधैं होश पुऱ्याउनुपर्छ ।

### *दुइटा सगरमाथा ?*

जुन शब्दको जोसँग सम्बन्ध छ, त्यसलाई उसकै नजीक लगेर राख्नुपर्छ । नत्र कुरो बिग्रन्छ ।

- *दुइटा सगरमाथाका तस्वीर* ज्यादै आकर्षक थिए ।

  सगरमाथा एउटै हो, तस्वीर मात्र *दुइटा* हुन् । त्यसैले भन्नुपर्छ– *सगरमाथाका दुइटा तस्वीर* ज्यादै आकर्षक थिए ।

  – *एउटा बस्नेतहरूको* घर भत्कन लागेको थियो ।

  – *थुप्रै राष्ट्र बैंकका कर्मचारी* गिरफ्तार भए ।

  – चारवटै रीताका सारी हराए ।

  कुरा उही हो । भन्नुपर्छ– *बस्नेतहरूको* एउटा घर/*राष्ट्र बैंकका थुप्रै कर्मचारी*/रीताका चारवटै *सारी* ।

- *प्लास्टिकको पानी राख्ने गाग्री* हरायो ।

  *प्लास्टिकको पानी* कस्तो हुँदो होला ? भन्न खोजिएको हो– *पानी राख्ने प्लास्टिकको गाग्रो* ।

- *मन्त्रीज्यूको शिक्षण अस्पतालमा* उपचार हुँदैछ ।

शिक्षण अस्पताल *मन्त्रीज्यूको* होइन । भन्नुपर्छ– *शिक्षण अस्पतालमा मन्त्रीज्यूको उपचार हुँदैछ* । अथवा, *मन्त्रीज्यूको उपचार शिक्षण अस्पतालमा हुँदैछ ।*

- ❑ *कालो उद्धवको* चप्पल घनश्यामले लगाएको छ ।

  *कालो* उद्धवलाई होइन, चप्पललाई भन्न खोजिएको हो । *त्यसैले– उद्धवको कालो* चप्पल... लेख्ने ।

- ❑ *बैठकमा हात्तीले नुहाएको तस्वीर* टाँगिएको छ ।

  *बैठकमा* हात्तीले कसरी नुहायो होला त ? भन्न खोजिएको हो– *हात्तीले नुहाएको तस्वीर बैठकमा* टाँगिएको छ ।

- ❑ *अलिअलि बस* गुड्न थाल्यो ।

  भन्नुपर्छ– *बस अलिअलि* गुड्न थाल्यो ।

## केमा जोड ?

- ❑ त्यो खबर सुनेर *धुरुधुरु उनी रुन थाले ।*

  जोड दिन खोजिएको कुरा ठीक ठाउँमा नपरेर वाक्य प्रभावहीन भएको छ । भन्नुपर्छ– *उनी धुरुधुरु रुन थाले ।*

  जेमा जोड दिन खोजिएको हो, त्यसलाई वाक्यको अन्तिमतिर, क्रियापद नजिकै राख्नुपर्छ । जस्तै :

  – गणेश *अल्छी भए पनि बुद्धिमान छ ।* (त्यसैले मलाई मन पर्छ)

  – गणेश *बुद्धिमान भए पनि अल्छी छ ।* (त्यसैले मलाई मन पर्दैन)

- ❑ उसले *धेरै सहयोग* हामीलाई गर्‍यो ।

  जोड *हामीलाई* मा होइन, *सहयोग* मा दिन खोजिएको छ । त्यसैले भन्नुपर्छ– उसले हामीलाई *धेरै सहयोग* गर्‍यो ।

- ❑ *त्यसलाई,* जसले कानून उल्लंघन गर्छ, सजाय दिनैपर्छ ।

  बेढंगे वाक्य । लेख्नुपर्छ– *जसले कानून उल्लंघन गर्छ, त्यसलाई सजाय दिनैपर्छ ।*

- ❑ *मात्र सुनील* पोखरा गयो ।

मात्र शब्द वाक्यको शुरूमा राख्ने होइन । यसले वाक्यमा रहेको जुनसुकै शब्द (नाम, सर्वनाम, विशेषण, अव्यय, क्रिया) मा जोड दिन सक्छ । जेमा जोड दिन खोजेको हो, 'मात्र' त्यसभन्दा पछि राख्नुपर्छ । यहाँ भन्नुपर्छ– *सुनील मात्र* पोखरा गयो ।

*मात्र* शब्द यताउति सार्नासाथ वाक्यको आशय आकाश-पाताल फरक पर्छ । जस्तै :

- *सुनील मात्र* पोखरा गयो । (अर्थात्, *अरू चाहिं गएनन्*)
- सुनील *पोखरा मात्र* गयो । (अर्थात्, ऊ *अरूतिर चाहिं गएन*)
- सुनील पोखरा *गयो मात्र* । (अर्थात्, उसले त्यहाँ *घुम्न चाहिं पाएन*)

❑ निकिताले *बीनालाई मात्र चिया* खुवाई ।

*बीनालाई मात्रै* चिया खुवाई (अरूलाई खुवाइन) भन्न खोजिएको भए यो वाक्य सही छ । तर बीनालाई *चिया मात्रै* खुवाई (अरू थोक केही खुवाइन) भन्न खोजिएको भए यो वाक्य गलत छ । लेख्नुपर्छ : निकिताले *बीनालाई चिया मात्र* खुवाई ।

**क्रमभंग**

❑ पार्टीमा *निकेश र नीता कालो सारी र सेतो सूट* लगाएर आएका थिए ।

शब्दको क्रम मिलेन । *निकेशले सारी र नीताले सूट* लगाएको होइन । तर यस वाक्यबाट त्यस्तै अर्थ निस्कन्छ । सही अर्थ बुझाउन लेख्नुपर्छ– *निकेश र नीता सेतो सूट र कालो सारी लगाएर ...* ।

❑ विमल खुशी भयो भने *हजार रुपैयाँ त के, सय रुपैयाँ पनि* चन्दा दिन सक्छ ।

कुराको क्रम मिलेको छैन । भन्नुपर्छ– *सय रुपैयाँ त के, हजार रुपैयाँ पनि* चन्दा दिन सक्छ ।

यस्ता खालका वाक्यमा सामान्य अवस्थाबाट विशेष अवस्थातिर बढ्नुपर्छ । नत्र वाक्य हाँसउठ्तो हुन्छ । जस्तै :

- विजयले कलेज त *टप* गऱ्यो नै, एमबीए पनि *पास* गऱ्यो ।

भन्नुपर्ने– एमबीए त *पास* गऱ्यो नै, कलेज पनि *टप* गऱ्यो।

- ❑ बाढीले घर बगाएपछि ऊ सात दिन भोकै पऱ्यो। *एक दिन त खाजा पनि खान पाएन।*

'सात दिन भोकै पऱ्यो' भनिसकेपछि 'एक दिन खाजा खान पाएन' भन्नुको के तुक ? दोस्रो वाक्यको काम छैन।

- ❑ दिनभरि *सुतेको* भन्दा घुमफिर *गर्नु* राम्रो।

यस प्रकारका वाक्यमा एकै खालका शब्द प्रयोग गर्नु राम्रो हुन्छ। यहाँ दुई खालका शब्द (सुतेको/गर्नु) परेका छन्। तिनलाई यसरी मिलाउन सकिन्छ :

दिनभरि *सुतेको* भन्दा घुमफिर *गरेको* राम्रो। अथवा,

दिनभरि *सुत्नु* भन्दा *घुमफिर गर्नु* राम्रो।

- ❑ *पढाइ* सँगसँगै *स्वस्थ हुन* पनि ख्याल गर्नुपर्छ।

भन्नुपर्छ– *पढाइ* सँगसँगै *स्वास्थ्य* को पनि ख्याल गर्नुपर्छ।

## तुलना

- ❑ कमलेश *बढी* कालो छ।

कोभन्दा *बढी ?* खुलाउनैपर्छ। जस्तै : *कमलेश* दिनेशभन्दा *बढी* कालो छ।

– हिजोभन्दा आज *तुलनात्मक रूपमा* कम गर्मी छ।

*तुलनात्मक रूपमा* चाहिँदैन। 'हिजोभन्दा आज कम गर्मी छ' भन्नु नै मीठो र छरितो हुन्छ।

- ❑ बबिताको कपाल *पवित्राभन्दा लामो* छ।

पवित्रा साढे पाँच फीट अग्ली होलिन्। उनीभन्दा पनि लामो ? भन्न खोजिएको हो– *पवित्राको भन्दा लामो।*

– भीमसेनसँग *हात्ती जस्तो बल* थियो।

भन्नुपर्छ– भीमसेनसँग *हात्तीको* जस्तो *बल* थियो।

- गोष्ठीमा *अपेक्षाकृत* कम मानिस सहभागी भए ।

*अपेक्षाकृत* होइन, *अपेक्षा गरिएभन्दा* । वा, *आशा गरिएभन्दा* ।

– आशुतोष *अपेक्षाकृत* चाँडै आइपुग्यो ।

*अपेक्षाकृत* होइन, *सोचेभन्दा* चाँडै । *अपेक्षाकृत* हटाएर 'आशुतोष चाँडै आइपुग्यो' मात्र भन्दा पनि हुन्छ ।

*अपेक्षाकृत* ले वाक्यलाई भद्दा बनाउँछ । यसको प्रयोगबाट सकेसम्म बच्ने ।

## अलमलिएको

- *अल्छी स्वभाव र बेइमानले* कहिल्यै प्रगति गर्न सक्तैन ।

भन्नुपर्छ– *अल्छी स्वभावको र बेइमानले* कहिल्यै प्रगति गर्न सक्तैन । सीधै *अल्छी र बेइमानले...* भन्दा झन् राम्रो ।

- किताब *किन्ने मात्र होइन,* पढ्नु पनि पर्छ ।

समस्या उस्तै हो । भन्नुपर्छ :

किताब *किनेर मात्र हुँदैन,* पढ्नु पनि पर्छ । अथवा,

किताब किन्ने मात्र होइन, *पढ्ने पनि गर्नुपर्छ ।*

- *गोपाल पढाएको ध्यानपूर्वक सुन्ने* र नबुझेको कुरा सोध्छ ।

*गोपाल पढाएको ध्यानपूर्वक सुन्ने* वाक्यांश (उपवाक्य) अधूरो/अलमलिएको छ । किन भने यसको क्रियापद छैन र वाक्यमा भएको क्रियापदसँग सम्बन्ध गाँसिएको पनि छैन । गडबडी हटाउन वाक्यलाई यसरी मिलाउनुपर्छ :

गोपाल पढाएको ध्यानपूर्वक *सुन्छ* र नबुझेको कुरा *सोध्छ* । अथवा,

गोपाल पढाएको ध्यानपूर्वक *सुन्ने* र नबुझेको कुरा *सोध्ने* गर्छ ।

- पोहोर तीन जनालाई *छात्रवृत्ति दिइएको* र यसपालि १० जनालाई दिने योजना छ ।

उही समस्या । *छात्रवृत्ति दिइएको* को क्रियापद नभएकाले त्यहाँसम्मको वाक्यांश अधूरो/अलमलिएको छ । भन्नुपर्छ– पोहोर तीन जनालाई *छात्रवृत्ति दिइएको थियो* र यसपालि... ।

## अनावश्यक भारी

अनावश्यक शब्दले वाक्यलाई बोझिल बनाउँछ । वाक्यमा त्यस्ता शब्द नपरुन् भनेर सतर्क रहनुपर्छ । परेको भेटिएमा हटाउनुपर्छ ।

- सडक निर्माण *कार्य* हुँदैछ ।
  परीक्षाको तयारी *कार्य* चलिरहेको छ ।

  *निर्माण/तयारी* भनेकै *कार्य* हो । त्यसैले *कार्य* भनिराख्नुपर्दैन । *सडक निर्माण हुँदैछ/परीक्षाको तयारी चलिरहेको* छ भन्दा पुग्छ ।

- हाम्रो विद्यालयको *विगत* इतिहास गर्व गर्न लायक छ ।
  लिम्बूहरूको *परम्परागत* संस्कृति निकै समृद्ध छ ।
  मोटरसाइकल किन्दा घडी *सित्तैंमा* उपहार पाइन्छ ।
  सगरमाथा विश्वको सर्वोच्च *अग्लो* शिखर हो ।

  कुरा उही हो । इतिहास भनेकै *विगत* हो । त्यसैले *विगत* चाहिँदैन । *हाम्रो विद्यालयको इतिहास...* भन्नुपर्छ । संस्कृति *परम्परागत* नै हुन्छ । त्यसैले *परम्परागत* लेख्नुपर्दैन । *लिम्बूहरूको संस्कृति...* लेख्नुपर्छ । उपहार भनेकै *सित्तैंमा* दिइने कुरा हो । त्यसैले *सित्तैंमा* भन्नुपर्दैन । *...घडी उपहार पाइन्छ* भने पुग्छ । सर्वोच्च भनेकै *सबैभन्दा अग्लो* हो । त्यसैले *अग्लो* लेखिराख्नुपर्दैन । *सगरमाथा विश्वको सर्वोच्च शिखर हो* भने पर्याप्त हुन्छ ।

- जागीर खान थालेपछि म पूर्णतः *रूपमा* आत्मनिर्भर भएँ ।
  उसले तीन वर्ष निरन्तर *रूपमा* करातेको अभ्यास गर्‍यो ।
  प्रमुख अतिथि आएपछि कार्यक्रम विधिवत् *रूपमा* शुरू भयो ।

  तीनवटै वाक्यमा *रूपमा* को काम छैन । त्यो अर्थ पूर्णतः/निरन्तर/विधिवत् शब्दले स्वतः बुझाउँछन् ।

- जापानी मोटरसाइकल *सबैभन्दा सर्वोत्कृष्ट* मानिन्छ ।
    *सबैभन्दा* भन्नुपर्दैन । *सर्वोत्कृष्ट* भनेकै *सबैभन्दा उत्कृष्ट* हो ।
- टेबुल टेनिसमा रीता र सरिता बीच *आपसी* प्रतिस्पर्धा थियो ।
    *आपसी* चाहिँदैन । दुईबीचको प्रतिस्पर्धा स्वतः *आपसी* हुन्छ ।

**परेला आँखाकै !**

- पूजाका *आँखाका* परेला आँसुले भिजेका थिए ।
  किरणका *औंलाका* नङ निकै लामा छन् ।
    *परेला* आँखाकै हुन्छन्, *नङ* औंलाकै हुन्छन् । त्यसैले यी वाक्यमा *आँखाका/औंलाका* शब्दको काम छैन ।
- हामी त्यस दिन *भगवानको* मन्दिर गयौं ।
    *भगवानको* भनिराख्नुपर्दैन । मन्दिर *भगवानकै* त हुन्छ नि !
- किशोरको स्कूलमा १२ जना शिक्षक *रहेका* छन् ।
  उसको कक्षामा २४ जना विद्यार्थी *अध्ययनरत* छन् ।
    पहिलो वाक्यमा *रहेका* चाहिंदैन । दोस्रो वाक्यमा *अध्ययनरत* को काम छैन ।
- लुगा किन्दा *जम्मा* चार हजार रुपैयाँ खर्च भयो ।
  विद्यालयको पानीटंकी *आकारमा* निकै ठूलो छ ।
  *विभिन्न* चार जनाले भाषण गरे ।
  केही *संख्यामा* मानिस भेला भएका थिए ।
  म *विगत* दुई वर्षदेखि गणित पढाउँदैछु ।
    पाँचवटै वाक्यमा छड्के अक्षरमा लेखिएका शब्दको काम छैन ।
- *छ महीनाको अवधि* मा तीन पल्ट जापान गएँ ।
    *छ महीनामा* भने पुग्छ । *अवधि* चाहिँदैन ।
- *न्यूनतम* पाँच जनादेखि *अधिकतम* १० जनासम्म जान सक्छन् ।
    *पाँच जनादेखि १० जनासम्म* भन्दा पुग्छ । *न्यूनतम* र *अधिकतम* को अर्थ स्वतः बुझिन्छ । (*पाँचदेखि १० जनासम्म* भन्दा झन् राम्रो !)

### *व्यक्तिगत*

- यो मेरो *व्यक्तिगत* विचार हो ।

  *मेरो* भनेपछि *व्यक्तिगत* भन्ने स्वतः बुझिन्छ । अर्काको विचारलाई *मेरो* भनिँदैन नै । त्यसैले *व्यक्तिगत* भनिराख्नुपरेन ।

- शनिवार बजार गएर पर्याप्त *मात्रामा* तरकारी किनें ।

  यस वर्ष धानको व्यापार निकै कम *मात्रामा* भयो ।

  फलफूलको बिक्री भने प्रशस्त *मात्रामा* भएको छ ।

  तीनवटै वाक्यमा *मात्रामा* को काम छैन ।

- सबै जना गीत *गाउनका लागि* तयार भए ।

  पौडी *खेल्नका लागि* चार बजे स्विमिङ पूल पुग्यौं ।

  नाटक *हेर्नका लागि* २०० जना दर्शक भेला भए ।

  काम भने केही सघाउँदैन, *खानका लागि* मात्र अघि सर्छ ।

  चारवटै वाक्यमा *का लागि* जरूरी छैन । हटाउने ।

  गाउन, खेल्न, खान, बस्न, सुत्न, हेर्न जस्ता क्रियासँग *का लागि* जोड्नु पर्दैन । नाम-सर्वनाम सँग मात्र जोड्नुपर्छ । जस्तै– छोरीका लागि किनेको पुतली । सबैका लागि स्वास्थ्य ।

- दिदीले *एक हजारको* किताब किन्नुभयो ।

  चाहिने शब्द पनि नराखेर वाक्यलाई अस्पष्ट बनाउन हुँदैन । एक *हजारको* मात्र भनेर पुग्दैन । भन्नैपर्छ– *एक हजार रुपैयाँको* ।

### *सशस्त्र हतियारधारी*

वाक्यमा एउटै अर्थ दिने दुइटा शब्द नपरून् भनेर सधैं होश गर्नुपर्छ । साथै उही शब्द दोहोरिन नपाओस् भनेर पनि ख्याल गर्नुपर्छ ।

- बाटामा दुई जना *सशस्त्र हतियारधारी* व्यक्ति पनि बसमा चढे ।

  *सशस्त्र* र *हतियारधारी* को अर्थ एउटै हो । दुई मध्ये एउटा शब्द मात्र राख्ने ।

- उनले कहिल्यै *गलत कुकर्म* गरेनन् ।

  *कुकर्म* को अर्थ हो– *गलत वा नराम्रो काम*। त्यसैले कि *गलत* हटाएर *कुकर्म गरेनन्* मात्र भन्ने, कि *गलत काम गरेनन्* भन्ने ।

- पालेले *केवल* २० रुपैयाँ *मात्र* फिर्ता दियो ।

  *केवल* र *मात्र* मध्ये एक थोक मात्र भन्ने । दुवैको अर्थ उही हो ।

- गुरुआमाले स्वयं आफैंले पानी ल्याउनुभयो ।

  *स्वयं* र *आफैंले* मध्ये एउटा शब्द मात्र राख्ने ।

- अरनिको क्लब *भित्रको आन्तरिक* झगडा निकै चर्किएको छ ।

  *आन्तरिक* भनेकै *भित्रको* हो । त्यसैले अरनिको क्लबको *आन्तरिक झगडा* भन्ने । अथवा, अरनिको *क्लब भित्रको झगडा* भने पनि हुन्छ ।

- *भोलि हुन सक्ने सम्भावित* क्षतिबारे आजै विचार गरौं ।

  *भोलि हुन सक्ने* र *सम्भावित* ले एउटै अर्थ दिइरहेका छन् । दुईमध्ये एक थोक मात्र भन्ने ।

- नेताहरूले *जनताको जनादेश* को सम्मान गरेको देखिएन ।

  *जनताको* चाहिंदैन । *जनादेश* भनेकै *जनताको आदेश* हो ।

- गरिमा *आफैं नै* लुगा धुन्छिन् ।
  *त्यही नै* उनको विशेषता हो ।

  *आफैं* भनेपछि *नै* भन्नुपर्दैन । *त्यही* भनिसकेपछि *नै* चाहिंदैन । किन भने, *आफैं* भनेकै *'आफू नै'* हो । *त्यही* भनेकै *'त्यो नै'* हो ।

- *सपरिवार सहित* पाल्नुहोला ।
  *सधन्यवाद सहित* यो प्रमाणपत्र दिइएको छ ।

  दुवै वाक्यमा *सहित* यो काम छैन । *सपरिवार/ सधन्यवाद* मात्र लेख्ने । किन भने, *सपरिवार* भनेको *परिवार सहित* हो । *सधन्यवाद* भनेको *धन्यवाद सहित* हो ।

  अथवा, 'स' हटाएर *परिवार सहित* पाल्नुहोला/ *धन्यवाद सहित* यो प्रमाणपत्र दिइएको छ मात्र लेख्ता पनि हुन्छ ।

- यस *प्रकार* उनले धेरै *प्रकार* का जागीर खाए ।

  एउटा *प्रकार* हटाउने । जस्तै– यस प्रकार उनले **धेरै खालका...** । अथवा, *यसरी* उनले धेरै *प्रकारका*... ।

  – दिउसो *बजार* गएर रामेश्वरले *बजार* बाट कपडा किन्यो ।

  दोस्रो बजार *(बजारबाट)* अनावश्यक !

## अंक र मिति

- विद्यालयमा ४ *जना* शिक्षक छन् । *अठार जना* विद्यार्थी छन् ।

  *चार जना शिक्षक/१८ जना विद्यार्थी* लेख्ने ।

  एउटा मात्र अंक भएको संख्या (एक देखि नौ सम्म) अक्षरमा लेख्ने । दुई वा तीन अंक भएको संख्या (१० देखि ९९९ सम्म) अंकमा लेख्ने । (मिति, कक्षा आदि पनि अंकमै लेख्ने ।)

  जस्तै– *आठ* वटा कुर्सी/२५ जना जन्ती/४३० पृष्ठको किताब।

  त्यसभन्दा माथिको संख्या भने अंक र अक्षर मिलाएर लेख्ने । अंकमा मात्र वा अक्षरमा मात्र नलेख्ने ।

  जस्तै– *१५,२२,७४,३८६* नलेख्ने । *पन्ध्र करोड बाइस लाख चौहत्तर हजार तीन सय छयासी* पनि नलेख्ने । अंक मात्र लेख्ता पढ्न गाह्रो/अलमल हुन्छ भने अक्षर मात्र लेख्ता भद्दा देखिन्छ । त्यसैले *१५ करोड २२ लाख ७४ हजार ३८६ लेख्ने* । (ठ्याक्कै संख्या जनाउनु जरूरी छैन भने चाहिं 'राउन्ड फिगर' मा *१५ करोड २३ लाख* मात्र लेख्नु राम्रो र छरितो हुन्छ ।)

- सहकारीले *सैकडा १४ प्रतिशत* ब्याज लिन थालेको छ ।

  *सैकडा* र *प्रतिशत* भन्नु उही हो । त्यसैले कि *सैकडा १४ ब्याज* भन्ने, नत्र *१४ प्रतिशत ब्याज* मात्र भन्ने ।

- चैतमा स्याउको भाउ प्रतिकिलो *२०० रुपैयाँ* थियो । वैशाखमा ५० *प्रतिशत* बढेर *३०० रुपैयाँ* पुग्यो । जेठमा ५० *प्रतिशत* घटेर फेरि *२०० रुपैयाँ* भयो ।

गलत ! २०० मा ५० *प्रतिशत बढ्दा* ३०० पुगेको त ठीक हो । तर ३०० मा ५० *प्रतिशत (अर्थात् आधा)* घट्ता १५० हुन्छ । २०० हुँदैन ।

- *करीब २०० भन्दा बढी* बस चलिरहेका छन् ।
*लगभग २०० भन्दा बढी* साइकल हराए ।

  *करीब/लगभग* भनेपछि *बढी* भन्न मिल्दैन ।

  *करीब* अथवा *लगभग* को अर्थ हो– *पुग नपुग/हाराहारी* । त्यसैले, २०० *जति* भन्न खोजेको भए *करीब २०० बस/लगभग २००* साइकल मात्र भन्ने । '२०० भन्दा बढी' भन्न खोजेको भए त्यही भन्ने, *करीब/लगभग* नभन्ने ।

- *जेठ १०, २०७१/१० जेठ २०७१*

  यो लेखाइ सही होइन । मिति पहिल्याउँदा ठूलो परिधिबाट सानोतिर लाग्ने हाम्रो परम्परा छ । त्यसैले *२०७१ जेठ १० (गते)* नै लेख्नुपर्छ ।

  समयको हिसाब गर्दा पनि हामी यही क्रम अपनाउँछौं । *१० घण्टा ४० मिनेट* भन्छौं; *४० मिनेट १० घण्टा* भन्दैनौं । *१२ वर्ष चार महीना सात दिन* भन्छौं; *सात दिन चार महीना १२ वर्ष* भन्दैनौं ।

## हाँसउठ्तो

- 'परेलीका ओठबाट आँसु झरिरह्यो ...'

  ओठबाट आँसु झर्छ र ? (दोष र अलंकारको सामान्य ज्ञान नभएका कारण बिग्रिएको वाक्य ।)

- '*रक्ताम्य* ती तिम्रा अधरहरूमा, न मैले कहिल्यै हरियाली पोतें ।'

  *रक्ताम्य* को अर्थ हो– *रगतपच्छे/रगत लतपतिएको* । प्रेमिकाका अधर (ओठ) कसको रगतले लतपतिएका ?

- कोशी टप्पूमा अर्नाको *जनसंख्या* कम भएको छ ।

  *जनसंख्या* को अर्थ *मानिसको संख्या* हो । *अर्ना* मानिस हुन् र ?

- प्रहरीले *सतह* सम्म डुबेर अनुसन्धान गऱ्यो ।

  *सतह* भनेको *माथिल्लो तह* हो । सतहमा के खाएर डुब्नु ? बरु डुबेको मानिस उत्रेर सतहमा आइपुग्छ ।

- *'बलियो र चम्किलो दाँतका लागि एभरेस्ट टूथपेस्ट ...'* (विज्ञापन)

  त्यसो भए, कमजोर र नचम्किला दाँतका लागि चाहिं कुन टूथपेस्ट नि साथी ?

- यो कमजोरी कसको *हो ?* भन्ने प्रश्न उठेको छ ।

  वाक्यका बीचमा कहिल्यै प्रश्नचिह्न लगाइँदैन । हटाउने ।

- *बरबादै भैगो नि !* भनेर उनी रुन थाले ।

  विस्मयादिबोधक चिह्न पनि वाक्यको बीचमा लाग्दैन । हटाउने ।

**असभ्य**

- छात्रवृत्ति चाहिरहेको सुदेशलाई क्याम्पस प्रमुखले *लोप्पा ख्वाइदिए ।*

  आफ्नै खर्चमा एमए गरेर उसले सबैलाई *झापड लगाइदियो ।*

  *लोप्पा ख्वाउनु, झापड लगाउनु* जस्ता प्रयोगले *असभ्यता* प्रदर्शन गर्छन् । यस्तो भाषा प्रयोग गर्नु ठीक होइन ।

- राजधानी गए जागीर पाइन्छ भनेर रघुले महेशलाई *घाँस हाल्यो ।*

  महेश *पशु* हो र ?

- जनविरोधी काम गरेर नेताहरू आफैं *नांगिए ।*

  भ्रष्टाचारको पर्दाफास गरेर उसले सचिवलाई *नंग्यायो ।*

  लोकतन्त्रमाथि *बलात्कार* गर्नेहरूलाई जनताले छोड्नेछैनन् ।

  *नांगिने/नंग्याउने/बलात्कार* गर्ने जस्ता शब्दतिर लहसिंदै जाँदा भाषा असभ्य मात्र होइन फोहोरी समेत हुँदै जान्छ । यसले हाम्रो सोचाइलाई पनि असभ्य र फोहोरी बनाउँदै लैजान्छ ।

  असभ्य र फोहोरी भाषाको प्रयोग गर्न हुँदैन ।

**थोत्रा शब्द**

अत्यन्तै बढी प्रयोग भएर आफ्नो चमक र आकर्षण गुमाइसकेका शब्द/शब्दावली (जसलाई अंग्रेजीमा *क्लिशे* भनिन्छ) को प्रयोगबाट सकेसम्म बच्नुपर्छ । किन भने, यिनले वाक्यको ताजापान र प्रभाव घटाइदिन्छन् । जस्तै :

*भविष्यका कर्णधार । आधा आकाश । एउटै रथका दुई पांग्रा । धमिलो पानीमा माछा मार्नु । आवाज बुलन्द गर्नु । सन्देश जानु । सम्बोधन गर्नु । ब्रह्मलूट । मूकदर्शक । अग्रसरता । ध्रुवीकरण । विकल्प छैन । वाग्मतीमा धेरै पानी बगिसकेको छ*, आदि ।

- ❑ खास समूह/पेशामा प्रयोग हुने विशेष खालका शब्द/शब्दावली (जसलाई अंग्रेजीमा *जार्गन* भनिन्छ) को प्रयोग पनि सकेसम्म नगर्नु राम्रो । यस्ता शब्दले भाषा त विकृत बनाउँछन् नै, यिनको अर्थ पनि अधिकतर पाठक/प्रयोगकर्ताले बुझेका हुँदैनन् । जस्तै :

  *भूतदर्शी । वैश्वीकरण । कार्यभार । सकारात्मक विभेद । डिफ्याक्टो । डिस्कोर्स । प्रोटोटाइप । बटमलाइन । हरितगृह । डायास्पोरा । डेडलाइन । मुद्राप्रदाय । कमिशनतन्त्र । माफिया । भिजिलान्ते । नव सामन्तवादी । नव उदारवादी । संशोधनवादी । चेन अफ कमान्ड । विप्रेषण आप्रवाह । अग्रगामी निकास । लैंगिक सम्पर्क विन्दु*, आदि ।

**दुष्प्रभाव**

नेपाली भाषाको आफ्नै शैली र प्रकृति छ । त्यसलाई ख्याल गरेर त्यसै अनुसार लेख्नुपर्छ । अरू भाषाको, पराई शैलीले नेपालीलाई थिच्यो भने भाषा बिग्रँदै जान्छ । शब्द नेपालीकै भए पनि भाषाबाट नेपालीपन हराउँदै जान्छ ।

- ❑ केशव, तिमी *तिम्रो* इच्छा अनुसार काम गर ।

  यो नेपाली शैली होइन । भन्नुपर्छ– केशव तिमी *आफ्नो* इच्छा अनुसार काम गर ।

- *मैले उहाँलाई प्रश्न गर्दा गुरुले भन्नुभयो– ।*
  वाक्यमा पहिले सर्वनाम (उहाँ), त्यसपछि नाम (गुरु) राख्ने शैली नेपाली होइन । भन्नुपर्छ– मैले गुरुलाई प्रश्न गर्दा उहाँले भन्नुभयो– ।
- *भाइ खुशी हुनेछ, यदि मैले घडी किनिदिएँ भने ।*
  नेपाली शैली हो– मैले घडी किनिदिएँ भने भाइ खुशी हुनेछ ।
- भोजभतेरमा जाँदा म सधैं कोट *प्रयोग गर्छु ।*
  यो नेपाली पारा होइन । यसको सट्टा भन्नुपर्छ– ...म सधैं कोट लगाउँछु ।
- म तपाईंहरूलाई धन्यवाद दिन *चाहन्छु ।*
  चाहेर मात्रै दिएको ठहरिँदैन । भन्नुपर्छ– म तपाईंलाई धन्यवाद दिन्छु ।
- म भित्र आउन सक्छु ?
  असाध्यै भद्दा वाक्य । अनुमति माग्ने नेपाली शैली हो– म भित्र आऊँ ?
- के डिस्को जानु ठीक हो ?
  नेपाली पारा हो– डिस्को जानु ठीक हो *त ?*
- म आफ्नो कविता वाचन गर्न *गइरहेको छु ।*
  बोल्ने मान्छे वास्तवमै कहीं गइरहेको/हिंडिरहेको छ भने त यो वाक्य ठीकै हो । नत्र भन्नुपर्छ– म आफ्नो कविता वाचन गर्छु ।
- *योग* लाई *योगा, बुद्ध* लाई *बुद्धा, स्तूप* लाई *स्तूपा, मण्डल* लाई *मण्डला* भन्नु पनि गलत हो । *योग, बुद्ध, स्तूप, मण्डल* नै भन्नुपर्छ । हाम्रा शब्दलाई विदेशीले नजानेर भाँचभुँच पारे भन्दैमा हामी तिनको पछि लाग्न हुँदैन, हामीले त शुद्ध रूप नै चलाउनुपर्छ ।

# अनुच्छेद

शब्दहरू मिलेर वाक्य बने झैं वाक्यहरू मिलेर अनुच्छेद (प्याराग्राफ) बन्छ। एउटा वाक्यमा एउटा कुरा भनिन्छ; एउटा अनुच्छेदमा एउटा विषय, एउटा सन्दर्भ, त्यसको एउटा पक्ष वा एउटा बुँदा प्रस्तुत गरिन्छ। धेरै थोक मिसाएर गिजोलिएको अनुच्छेद भद्दा र प्रभावहीन हुन्छ।

अनुच्छेद धेरै लामो हुनुहुँदैन। चार-पाँच वाक्यदेखि आठ-दश वाक्यसम्मको अनुच्छेद राम्रो हुन्छ। भनिन्छ, लामा अनुच्छेद पढिँदैनन्, हेरिन्छन् मात्र। त्यस्ता अनुच्छेद देख्ता पाठकले असजिलो अनुभव गर्छ। त्यसैले अनुच्छेदलाई लामो होइन, छोटो-छरितो बनाउनु बेस। (पत्रकारितामा त एउटै वाक्यका अनुच्छेद पनि प्रशस्त पाइन्छन्।)

अनुच्छेदका वाक्यहरूले 'टीम स्पिरिट' मा काम गर्छन्। तिनीहरूबीच राम्रो संगति हुन्छ। पहिलो वाक्य 'क्याप्टेन' जस्तो हुन्छ। त्यसले मुख्य कुरो उठाउँछ। त्यसपछिका वाक्यले त्यसको समर्थन गर्दै कुरा स्पष्ट पार्छन्। त्यसका निम्ति तथ्य, विवरण, व्याख्या, छलफल, विश्लेषण आदि प्रस्तुत गर्छन्। अन्तिम वाक्यले बिट मार्छ। जस्तै :

> लुइँटेल गुरु दुई विशेषताका कारण अरूभन्दा फरक हुनुहुन्थ्यो। पहिलो थियो, पढाउने शैली। ज्यादै गहन र जटिल विषयवस्तुलाई पनि उहाँ एकै पटकमा, छर्लंग हुने गरी बुझाइदिनुहुन्थ्यो। १० कक्षालाई पढाएको कुरा ६ कक्षाको विद्यार्थीले पनि सहजै बुझ्थ्यो। दोस्रो विशेषता थियो, जुनसुकै विषय पढाउन सक्ने क्षमता र उत्साह।

उहाँ संस्कृतदेखि गणितसम्म र विज्ञानदेखि इतिहाससम्म हरेक विषय पढाउन सधैं तत्पर हुनुहुन्थ्यो । जहाँ, जुन वेला, जुन विषयको कुरा सोधे पनि जवाफ दिन तयार । यिनै विशेषताका कारण उहाँ विद्यार्थीहरू बीच सबैभन्दा लोकप्रिय हुनुहुन्थ्यो ।

आठ वाक्यको यो अनुच्छेद एउटा विषय/सन्दर्भमा केन्द्रित छ । पहिलो वाक्यले मुख्य कुरो उठाएको छ । त्यसपछिका वाक्यले त्यसलाई स्पष्ट पारेका छन्– गुरुका विशेषताहरूको वर्णन गरेर । अन्तिम वाक्यले निष्कर्ष निकाल्दै बिट मारेको छ ।

यो ठिक्कको अनुच्छेद हो । तर लुइँटेल गुरुका विशेषताहरूलाई थप तथ्य, घटना र व्याख्या सहित प्रस्तुत गर्ने हो भने यसलाई दुई अनुच्छेदमा बाँड्नुपर्ने हुन्छ । पहिलो विशेषता एउटा अनुच्छेदमा, दोस्रो विशेषता अर्को अनुच्छेदमा । अर्थात्, कुनै विषयका थुप्रै पक्ष छन् र तिनलाई विस्तृत रूपमा प्रस्तुत गर्नु छ भने हरेक पक्षका लागि छुट्टाछुट्टै अनुच्छेद बनाउनुपर्छ ।

कुनै कुराको लामो विवरण दिनु छ अथवा एउटै प्रसंग/सन्दर्भको सिलसिलाबद्ध/विस्तारपूर्वक वर्णन गर्नु छ भने त्यसलाई विभिन्न अनुच्छेदमा विभाजित गर्नुपर्छ । त्यस्तो वेला अनुच्छेदको ढाँचा अलिक फरक हुन सक्छ । हरेक अनुच्छेदमा पहिलो मुख्य वाक्य वा बिट मार्ने अन्तिम वाक्य नआउन सक्छ । तर 'एउटा अनुच्छेद एउटा मुख्य सन्दर्भमा केन्द्रित रहनुपर्ने' शर्त चाहिं हरेकले पूरा गरेकै हुनुपर्छ । जस्तै :

बिहान हामी उठ्ता आकाश छ्यांग खुलेको थियो । हिजो पानीले भिजाएका डाँडापाखाबाट बाफ आए झैं लाग्थ्यो । हाम्रा लागि खाना पकाउँदा गोठको धुरीबाट आएको धूवाँ त्यही बाफमा मिसिएको थियो । यहाँबाट हिंडेपछि दिनभर गोठ अथवा ओडार केही पनि नभेटिने हुनाले हामी भात खाएर मात्र हिंड्यौं ।

एउटा उकालो चढेपछि रूख भेटिन छाडे । भिराला डाँडामा जता हेरे पनि घाँसै घाँस मात्र थियो । नफुलेका घाँस भेट्न गाह्रै पर्थ्यो । कुनै बैजनी, कुनै पहेंला, कुनै सेता, कुनै राता । कुहिरो आउँदै जाँदै गर्दैथियो ।

अर्को एउटा उकालोमा केही मानिस हामीलाई उछिनेर अघि गए । तीमध्ये केहीले जाबीमा, केहीले डोकामा सामान बोकेका थिए । तिनको भेडीगोठ माथि दूधपोखरी छेउमा रहेछ । भेडीगोठमा बस्ने मानिसका लागि खानेकुरा बोकेर जान लागेका रहेछन् । यसलाई तिनीहरू 'खर्च' भन्दा रहेछन् ।

उकालो हिंड्दा तिनीहरूका पिंडौलाका नसा फुलेका थिए । गठिला, दह्रा पिंडौलाले ५०-६० केजी सामान र त्योभन्दा अलि कम वजनको मानिसको शरीर थामेको थियो । तिनका खुट्टामा जुत्ता चप्पल केही पनि थिएनन् । चीसो र ढुंग्यान जमीनमा नांगा खुट्टा हिंड्न तिनीहरू अभ्यस्त थिए ।

हिजो परेको पानीले गर्दा जुका सलबलाएका थिए । एउटा जुको एक जना मानिसको लौराको टुप्पामा उक्लेर आकाशतिर मुख फर्काएर मान्छेको खोजी गर्दैथियो । उसले लौरालाई छेउको झारमा घिसारिदियो । जुको झारमै छुट्यो । आज पानी परेन भने पनि जुकाले दुःख दिने रहेछन् भनेर अडकल काट्यौं हामीले । पानी परेका खण्डमा त जुकाले हाम्रो रगत चुस्ने निश्चितै थियो ।

(साभार : मोहन मैनाली/ *उपल्लो थलो*)

# शैली

लेखाइको तरीकालाई शैली भनिन्छ। भाव अभिव्यक्त गर्न अपनाइने खास ढाँचा नै शैली हो, जसले पाठकलाई कुरा राम्ररी बुझ्न सघाउँछ; उसको मनमा लेखकको व्यक्तित्व र क्षमताको छाप छोड्छ। हरेक लेखकको आफ्नै शैली हुन सक्छ र विषयवस्तु अनुसार पनि शैली फरक हुन सक्छ।

लेख्नुको मूल उद्देश्य आफ्नो कुरा अरूसम्म पुऱ्याउनु हो; आफ्नो कुरा अरूलाई बुझाउनु हो। धेरैभन्दा धेरै मानिसले तपाईंको कुरा त्यसवेला मात्र बुझ्न सक्छन्, जब लेखाइ सरल हुन्छ। लेखाइ सरल बनाउनु भनेको कुरा सरल बनाउनु होइन। जटिलभन्दा जटिल कुरा वा विचार पनि सरलतासाथ, सामान्य मानिसले समेत छर्लंग बुझ्न सक्ने गरी प्रस्तुत गर्नु हो।

लेखाइ सरल हुनुपर्छ; शुद्ध, स्पष्ट र स्वाभाविक पनि। त्यसमा लालित्य हुनुपर्छ र लयबद्धता पनि। त्यसले पाठकको मन छुनुपर्छ। उसलाई आह्लादित बनाउनुपर्छ। यसका लागि चाहिन्छ– निरन्तरको अभ्यास, साधना र समर्पण। यसको कुनै 'शर्टकट' वा चोरबाटो छैन। असल साहित्य र उत्कृष्ट लेखनशैलीका लागि मानिएका कृतिको सचेत अध्ययन यसका लागि सहयोगी हुन सक्छ। उही कुरो एउटाले लेख्ता किन प्रभावकारी भयो र अर्काले लेख्ता किन भएन भनेर विश्लेषण गर्नुहोस्, आफ्नो लेखाइलाई अरूको लेखाइसँग दाँजेर हेर्ने गर्नुहोस्। यसरी धेरै कुरा सिक्न सकिन्छ र आफ्नो लेखाइ सुधार्न सकिन्छ।

लेखनशैली राम्रो पार्न सर्वप्रथम आफ्नो लेखाइमा रहेका कमजोरी पहिल्याउनु र तिनलाई हटाउनु जरूरी हुन्छ। यो कृति त्यसैमा केन्द्रित

छ; यसका प्रत्येक अध्याय, शीर्षक, उपशीर्षक र उदाहरण तपाईंलाई यस कार्यमा सघाउन उपस्थित भएका हुन् । यसै क्रममा, लेखाइ सुधार्न सघाउ पुऱ्याउने केही सुझाव यहाँ प्रस्तुत छन् । सबैमा एकैचोटि फाल हाल्न खोज्नुभन्दा एउटा सुझावमा केही समय ध्यान केन्द्रित गर्नु र त्यसलाई व्यवहारमा उतार्न बानी परेपछि अर्को सुझावतर्फ लाग्नु बढी उपयोगी हुनेछ। तपाईंको लेखनशैली राम्रो पार्न यसले अवश्य सघाउनेछ :

१. **परम्परागत हिज्जे प्रयोग गर्नुहोस्** । त्यही शुद्ध हुन्छ । त्यही सही र सर्वस्वीकार्य हुन्छ । पाठकका निम्ति पनि त्यही सहज हुन्छ ।

नजानेर वा लहडबाजीमा लागेर हिज्जे बिगारियो भने पाठकले असहजता र तनाव महसूस गर्छ । किनभने, हिज्जे भनेको शब्दको दृश्य रूप हो । हाम्रो दिमागमा कुनै पनि शब्दको निश्चित रूप, निश्चित ढाँचा बसेको हुन्छ । त्यसलाई बिगारिदिएपछि दिमागले सहज रूपमा स्वीकार्न सक्तैन । पाठकको ध्यान विकर्षित हुन्छ । पढाइको प्रवाह खजमजिन्छ । एउटा शब्दमा गलत हिज्जे देखेपछि त्यसमा अल्झिएको दिमागले कैयौं वाक्य पार गरेर दोस्रो-तेस्रो अनुच्छेदमा पुगिसक्ता पनि त्यसको झस्को महसूस गरिरहेको हुन्छ । फलस्वरूप, पाठकले सहज-स्वाभाविक लयका साथ पढाइको स्वाद र आनन्द लिन सक्तैन । पाठकलाई आफ्नो लयमा बगाउन नसकेपछि लेखक सफल बन्न सक्ने कुरै भएन ।

२. **परिचित र सजिला शब्द प्रयोग गर्नुहोस्** । गह्रुंगा र बोझिला शब्द प्रयोग नगर्नुहोस् । सरल र सामान्य शब्दले नै लेखाइलाई सुन्दर बनाउँछ । *विद्युत्* को सट्टा *बिजुली*, *विलम्ब* को सट्टा *ढीलो*, *निकट भविष्यमा* को सट्टा *चाँडै*, *हिमाच्छादित* को सट्टा *हिउँले ढाकिएको*, *मुद्रित भयो* को सट्टा *छापियो* भन्ने बानी पार्नुहोस् ।

शब्दभण्डार खूब बढाउनुहोस् तर प्रयोगमा मितव्ययी बन्नुहोस् । खाँटी साहुजी जस्तो ! मौकामा हीरा फोर्नुहोस्, बेमौकामा कौडी नछोड्नुहोस् ।

प्रयोग गरिएका शब्द स्पष्ट, खँदिला, सटीक र मीठा-रसिला होउन् । आफूलाई नै अर्थ स्पष्ट नभएका शब्द कहिल्यै प्रयोग नगर्नुहोस् ।

३. **नबोलिने शब्द नलेख्नुहोस् ।** त्यस्ता शब्द निर्माण गर्नेतिर पनि नलाग्नुहोस् । *निथ्रुक्क भएँ* लेख्न छोडेर *निथ्रुक्किएँ* नलेख्नुहोस् । *ट्वाल्ल पर्‍यो* लाई *ट्वाल्लियो* भन्नेतिर नलाग्नुहोस् । *मेरो कुरा सुनाइबाट ऊ दंग पर्‍यो* नभन्नुहोस्, *मेरो कुरा सुनेर ऊ दंग पर्‍यो* नै भन्नुहोस् । *मोबाइल* सबैले बुझ्छन्, *सेलफोन* थोरैले मात्र; त्यसैले *सेलफोन* भन्नेतिर नलहसिनुहोस् । *लघु टेबुल* होइन, *सानो टेबुल* नै लेख्नुहोस् ।

४. **अनावश्यक एउटै शब्द पनि नराख्नुहोस् ।** *रूखबाट आँप तल खस्यो* मा *तल* अनावश्यक छ । खस्ने भनेको तल नै हो, मास्तिर केही खस्तैन । *ऊ गम्भीर संकटमा पर्‍यो* मा *गम्भीर* भनिरहनुपर्दैन । संकट साँच्चिकै हो भने त्यो सधैं गम्भीर हुन्छ । *यति कुरा भन्नु पूर्ण आवश्यक छ* मा *पूर्ण* को काम छैन । 'अपूर्ण आवश्यक' कस्तो हुँदो होला, सोच्नुहोस् त !

अनावश्यक विवरण वा व्याख्यातिर नलाग्नुहोस् । चाहिने जति मात्र दिनुहोस् । त्यो उद्देश्यमूलक हुनुपर्छ । नत्र लेखाइ झर्कोलाग्दो बन्न सक्छ । *ऊ मुसुमुसु हाँस्तै समर्थनमा आफ्नो टाउको तलमाथि हल्लाइरहेको थियो* भनिरहनुपर्दैन, *ऊ मुसुमुसु हाँस्तै टाउको हल्लाइरहेको थियो* भने पुग्छ । अरू कुरा प्रसंगबाट स्वतः बुझिन्छ । 'म पहिलो पटक श्यामको घर पुगें' भनेपछि आवश्यक हुँदा र आवश्यक भए जति मात्र घरको वर्णन गर्नु राम्रो हुन्छ । विना प्रयोजन घरको लम्बाइ, चौडाइ, अग्लाइ, झ्याल, ढोका, जस्केलो, चुकुल, भित्ता, बुट्टा, रंग, फर्निचर, गलैंचा, पर्दा आदिको विवरण दिइराख्नुपर्दैन ।

*वर्तमान परिप्रेक्ष्यमा जहाँसम्म अनुशासनको सवाल छ, हाम्रा शिक्षण संस्थाहरूमा अध्ययनरत अधिकांश विद्यार्थीवर्गमा अनुशासनको उपयुक्त मात्रा विद्यमान नरहेको अवस्थालाई आज कसैले पनि नकार्न नसक्ने*

*वस्तुतथ्य हामी सबैसामु छलेंगै छ* भनेर शब्दाडम्बर झल्काउनु पटक्कै राम्रो होइन । त्यसको सट्टा *हिजोआज विद्यार्थीहरू त्यति अनुशासित छैनन्* भन्नु नै छोटो, मीठो, स्पष्ट र सटीक हुन्छ ।

**५. उखान-तुक्काको बाढी नचलाउनुहोस्** । कहिलेकाहीं सटीक तवरले उखान प्रयोग गर्दा साँच्चै राम्रो हुन्छ । तर एउटै अनुच्छेदमा तीन-चार वटा उखान जोड्न थाल्नुभयो भने त्यो झर्कोलाग्दो पनि हुन्छ र त्यसले अलमल्याउँछ पनि ।

वाक्यैपिच्छे अलंकार प्रस्तुत गर्ने कसरतमा पनि नलाग्नुहोस् । उपमा, रूपक जस्ता अलंकार बुझेर ठीकसँग प्रयोग गर्नुहोस् । बोलीलाई 'तीर' भन्नुहुन्छ भने त्यो दिमाग अथवा मुटुमा 'गडेको' कुरा गर्नुहोस्, *उसको बोलीको तीरले म अलमल्ल परें* नभन्नुहोस् । *आँखाका नङ्ग्राले मलाई दुःखी पारे* नलेख्नुहोस् । *न्यायाधीशरूपी जनताले फैसला गरे* भन्नबाट जोगिनुहोस् । 'परेलीका ओठबाट आँसु झरिरह्यो' जस्तो नलेख्नुहोस् ।

**६. आवश्यक छैन भने विशेषण नलगाउनुहोस्** । *चीसो बरफ* मा *चीसो* को के काम ? *तीनतले अग्लो घर* मा *अग्लो* को के आवश्यकता ? *तीनपांग्रे रिक्सा* मा *तीनपांग्रे* को के तुक ? अनावश्यक वा अनुपयुक्त विशेषणबाट सधैं जोगिनुहोस् ।

क्रियाविशेषण पनि आवश्यक नभएसम्म नजोड्नुहोस् । *मेरो कुरा सुनेर ऊ एकदम फुर्कियो* मा *एकदम* को खासै काम छैन । *उनले पिलपिल आँसु बगाउँदै रुन्चे स्वरमा भनिन्* मा *रुन्चे स्वरमा* अनावश्यक त छँदैछ, त्यसले भनाइलाई कमजोर पनि तुल्याएको छ ।

**७. जार्गनबाट बच्नुहोस्** । पेशा वा वर्गविशेषको बोली, पारिभाषिक शब्द र प्राविधिक शब्दावलीबाट टाढा रहनुहोस् । *अर्थ मन्त्रालयले श्वेतपत्र जारी गरेको छ* वा *संसदले संविधानको धारा ४४ र ४५ खारेज गरेको छ*

भन्दा पाठकले केही बुझ्दैन। २० जना सामान्य मानिसलाई उक्त वाक्यहरू सुनाएर सोध्नुहोस् त, *श्वेतपत्र* को अर्थ कतिले बुझ्दा रहेछन् र *संसदले के-के खारेज गरेको हो* भन्ने कतिले बुझेछन् !

८. **लामा वाक्य नलेख्नुहोस्**। एउटा वाक्य सामान्यतः १५ शब्दमा सीमित गर्नुहोस्। शब्द अझ कम भए झन् राम्रो। त्यो भरसक एकै सासमा पढिसकियोस्। बोल्दा जस्तो बोलिन्छ त्यस्तै वाक्य ठीक हुन्छ। लामो वाक्य पढ्न र बुझ्न त गाह्रो हुन्छ नै, त्यसमा व्याकरणका गल्ती थुप्रिने सम्भावना पनि बढी हुन्छ।

लामो भयो भने वाक्य टुक्र्याइहाल्नु बेस। *एउटा वाक्य सामान्यतः १५ शब्दमा सीमित रहेको अथवा त्यसभन्दा कम शब्दको र भरसक एकै सासमा पढिसकिने तथा बोलीचाली अनुरूपको हुनु उपयुक्त हुन्छ* जस्ता वाक्य नलेख्नुहोस्। यसलाई चारवटा वाक्यमा टुक्र्याउन सकिन्छ। अघिल्लो अनुच्छेदमा यस्तै गरिएको छ।

लामा अनुच्छेद पढिँदैनन्, 'हेरिन्छन्' मात्र। अनुच्छेद पनि छोटा बनाउनुहोस्। त्यसले स्पष्टता देखाउँछ। लामो भयो भने वाक्य झैं अनुच्छेदलाई पनि टुक्र्याउनु उचित हुन्छ।

९. **सकेसम्म कर्तृवाच्यको प्रयोग गर्नुहोस्**। त्यो सोझो, स्पष्ट र सटीक हुन्छ। *बुबाको आगमन भयो* होइन, *बुबा आउनुभयो* भन्नु राम्रो। *स्वामीजीद्वारा योगको प्रशिक्षण दिइयो* होइन, *स्वामीजीले योगको प्रशिक्षण दिनुभयो* लेख्नु बेस।

जोड दिनुपर्ने कुरा अन्तिमतिर राख्नुहोस्। *मैले व्यर्थ भनेको जस्तै भयो* मा कुनै दम छैन। *मैले भनेको व्यर्थ जस्तै भयो* भन्दा मात्र वाक्य धारिलो हुन्छ।

वाक्यमा पदक्रम सही होस् भनेर एकदमै सतर्क रहनुहोस्। *प्रहरीद्वारा बेच्न लागिएकी महिलाको उद्धार* भन्दा उल्टो अर्थ लाग्न सक्छ; *बेच्न*

*लागिएकी महिलाको प्रहरीद्वारा उद्धार भनेर* त्यस्तो खतराबाट बच्न सकिन्छ।

*घर आउन एक घण्टा ढीलो भएकाले उसले राम्ररी खाना खान पनि सकेन* जस्ता हावादारी वाक्यबाट बच्नैपर्छ। राम्ररी खाना खान नसक्नु र घर आउन ढीलो हुनुमा कार्य-कारण-सम्बन्ध छैन।

१०. **स्पष्ट अर्थ बुझाउने, उपयुक्त क्रियापद खोज्नुहोस्।** सकेसम्म सक्रिय क्रियापदको प्रयोग गर्नुहोस्; काम जति नाम वा विशेषणको जिम्मा लगाएर क्रियापदलाई 'निष्क्रिय' नबनाउनुहोस्। *वृद्धि भयो* को सट्टा *बढ्यो* भन्नु, *प्रस्थान गर्नुभयो* को सट्टा *हिंड्नुभयो* भन्नु राम्रो हुन्छ।

उपवाक्यलाई क्रियापदसँग सम्बन्ध नजोडिएर लावारिस हुन नदिनुहोस्। *मेरो छोराले एसएलसी पूरा गरेको र हाल प्लस टु मा पढ्दैछ* भन्नु ठीक होइन। कि ...*एसएलसी पूरा गरेको* पछि छ क्रियापद राख्नुपर्छ, नत्र भन्नुपर्छ– *मेरो छोरो एसएलसी पूरा गरेर हाल प्लस टु मा पढ्दैछ।*

११. **नेपालीपनमा ध्यान दिनुहोस्।** सकेसम्म ठेट/मौलिक नेपाली शब्द प्रयोग गर्नुहोस्। *लगभग दश वटा कुर्सी* को सट्टा *गोडादशेक कुर्सी* भन्नु राम्रो, *काम पूरै सकियो* को सट्टा *काम निमिट्यान्न भयो* भन्नु मीठो। 'संस्कृत नपढेकोमा मलाई *पश्चात्ताप/अफसोस छ'* भन्नु भन्दा *पछुतो छ* भनेको बेस। *पैदल यात्रा गर्न सडकपेटी प्रयोग गर्नुहोस्* मा नेपालीपन छैन, *सडकपेटीबाट हिंड्नुहोस्* लेख्न थाल्नुहोस्।

अनुकरणात्मक शब्दको उपयोग गर्नुहोस्। *ऊ छेउमा बसेको थियो* मात्र पनि भन्न सकिन्छ, तर 'टुक्रुक्क', 'थुचुक्क', 'गजधम्म', 'ढसमस्स' वा 'धुमधुम्ती' थप्दा बसाइको दृश्य सजीव हुन्छ र वाक्य तेजिलो हुन्छ।

१२. **स्पष्टता कायम गर्नुहोस्।** लेख्नु भनेको सञ्चार गर्नु हो। त्यसैले लेखाइमा स्पष्टता हुनुपर्छ। भन्न खोजेको कुरा स्पष्ट भयो-भएन, ख्याल

गर्नुहोस् । एक थोक भन्न खोजेकोमा अर्कै अर्थ पो लाग्छ कि, विचार गर्नुहोस् । राम्रै नियतले लेखेको भए पनि अस्पष्ट वा अर्को अर्थ लाग्ने वाक्यका कारण प्रेमी-प्रेमिकाबीच सम्बन्ध बिग्रन्छ; मानिसले आत्महत्या गर्छन्; अनेक दुर्घटना हुन्छन् ।

स्पष्टता वाक्यमा मात्र होइन, सोचाइ र विचारधारामा पनि हुनुपर्छ । के भन्न खोजेको भन्ने स्पष्ट भएपछि मात्र लेखाइमा पनि स्पष्टता आउँछ । तपाईंमा अस्पष्टता छ भने अस्पष्टता नै सञ्चार हुने हो । एक किसिमले लेख्ता कुरा स्पष्ट भएन भने अर्को किसिमले लेख्नुहोस् ।

१३. **सहज बन्नुहोस् ।** बल गरेर, कनेर होइन सहजतापूर्वक लेख्नुहोस् । शब्दप्रयोग, वाक्यरचना दुवैमा सहजता आउनुपर्छ । तब मात्र लेखाइ प्रवाहमय बन्छ । खोजी खोजी गहन वा अप्ठ्यारा शब्द प्रयोग नगर्नुहोस् । प्रयोगका नाममा असजिला, अनौठा वाक्य बनाउनतिर नलाग्नुहोस् ।

एउटा कुरा लेख्न एक खालको ढाँचा उपयुक्त हुन्छ । आफ्नो कुरा कुन ढाँचामा भन्ने, आफैंले निर्क्योल गर्नुहोस् । त्यसै अनुसार मानसिक तयारी गर्नुहोस् । कागजमा खाका बनाए पनि हुन्छ । त्यसपछि भने सहजतासाथ अगाडि बढ्नुहोस् ।

१४. **कुरा प्रस्तुत गर्नुहोस्, आफूलाई होइन ।** भन्नुपर्ने कुरा राम्ररी प्रस्तुत गर्न ध्यान दिनुहोस्; आफ्नो व्यक्तित्व, महत्त्व वा विद्वत्ता प्रदर्शन गर्न होइन । कुरा अगाडि आओस्, आफू पछाडि नै बसेको राम्रो । लेख्ने अभिव्यक्तिका निम्ति हो, कसैलाई प्रभावित पार्नका निम्ति होइन । लेखाइ राम्रो भयो भने तपाईंको क्षमता त्यसैबाट झल्किन्छ; अभिव्यक्ति ठीक भयो भने पाठकलाई त्यसैले प्रभावित पार्छ ।

१५. **बढाइचढाइ नगर्नुहोस् ।** सत्य र यथार्थमा विश्वास गर्नुहोस्; कुनै पनि कुरा अतिरञ्जित नगर्नुहोस् । यो ठूलो कमजोरी हो । यसबाट तपाईंप्रति

पाठकको विश्वास गुम्न जान्छ। उसले पत्याउँदैन; 'घटाएर' बुझ्न थाल्छ। असावधानीपूर्वक प्रयोग गरिएको एउटै 'सुपरलेटिभ' वा अतिरञ्जनापूर्ण शब्दले पूरै लेखाइलाई ध्वस्त पार्न सक्छ।

१६. **अनावश्यक कुरा हटाउनुहोस्।** शब्द मात्र होइन अनावश्यक वाक्य, विवरण, प्रसंग र अनुच्छेद पनि रहन नदिनुहोस्। आफैंलाई सोध्नुहोस्– यो वाक्यले नयाँ कुरा भन्छ कि भनिसकेकै कुरा प्रकारान्तरले दोहोऱ्याइरहेको छ ? यो नभए पनि काम चल्छ कि ? यो विवरण वा प्रसंग यहाँ कत्तिको आवश्यक छ ? साँच्चै चाहिएर राखिएको हो कि मसित छ र मलाई राम्रो लागेको छ भनेर मात्र राखिएको हो ? अनि यो अनुच्छेद कत्तिको जरूरी छ ? हटाउँदा पनि फरक नपर्ने हो कि ? अथवा, यसको एउटा अंश मात्रै जरूरी हो कि ? खूब घोत्लिनुहोस् र अनावश्यक कुरा हटाउनुहोस्।

निर्धक्क भएर लेख्नुहोस् र निर्मम भएर स्व-सम्पादन गर्नुहोस्। नचाहिने कुरा काट्न, घटाउन, मिलाउन कहिल्यै नहिचकिचाउनुहोस्।

१७. **सिलसिला मिलाउनुहोस्।** वाक्य-वाक्य र अनुच्छेद-अनुच्छेद बीचको सिलसिला मिलेको तथा सहज हुनुपर्छ। बीचमा केही छुटेजस्तो, दाँत फुक्लिएर ठाउँ खाली रहेजस्तो वा दाँत खप्टिएजस्तो हुनुहुँदैन। अगाडि आउनुपर्ने कुरा पछाडि अथवा पछाडि आउनुपर्ने कुरा अगाडि आउन हुँदैन। अनुच्छेदहरूबीच तारतम्य मिलेको हुनुपर्छ। यसमा ध्यान दिनुहोस्।

१८. **पुनर्लेखन गर्नुहोस्।** सबै गरिसकेपछि पनि कताकता चित्त नबुझ्न सक्छ। केही मिलेन, केही पुगेन अथवा प्रभावकारी भएन भन्ने लाग्न सक्छ। त्यस्तो वेला पुनर्लेखन गर्नुहोस्। यस क्रममा तपाईं कुरालाई अर्कै कोण, अर्कै ढंग, अर्कै शैलीबाट प्रस्तुत गर्न सक्नुहुन्छ; लेखाइलाई बिलकुलै नयाँ स्वरूप दिन सक्नुहुन्छ। जबसम्म आफैंलाई चित्त बुझ्दैन, तबसम्म यो प्रक्रिया दोहोऱ्याउँदै जानुहोस्।

१९. **आफैं वाचन गर्नुहोस्** । लेखाइको प्रवाह एकनासले, सलल्ल अघि बढेको हुनुपर्छ । आफूले लेखेको कुरा आफैं वाचन गर्नु एकदमै जरूरी छ । मनमनै होइन, बोलेर । मिले-नमिलेको तपाईंले सहजै थाहा पाउनुहुनेछ । बीचमा नमिलेजस्तो, खजमजिएजस्तो, प्रवाहमा अवरोध आएजस्तो लाग्नासाथ मिलाउनुहोस् ।

२०. **सान्दर्भिकता पहिल्याउनुहोस्** । लेख्न त लेख्नुभयो, तर त्यसको सान्दर्भिकता कति छ ? उपयोगिता के हो ? पाठकहरूले अरू काम छोडेर त्यो पढ्नु किन जरूरी छ ? यी र यस्ता प्रश्नको ठोस जवाफ खोज्नुहोस् । उपयोगिता वा सान्दर्भिकता विनाको लेखोट प्रकाशित गर्दा त्यसले तपाईंलाई नै नराम्रो असर पार्छ ।

२१. **पाठकमाथि विश्वास गर्नुहोस्** । उसको चेतना र विवेकमाथि भरोसा गर्नुहोस् । उसलाई आत्मैदेखि आदर गर्नुहोस् । आफूलाई ऊभन्दा ठूलो, बढी जान्ने वा चलाख नठान्नुहोस् । भारीभरकम तर्क, उदाहरण, उद्धरण, सन्दर्भ, शब्दाडम्बर र नानाथरीका प्रयोगले उसमाथि हाबी हुने प्रचेष्टा नगर्नुहोस् । यसरी उसको दिमागमा त पुग्न सकिएला, तर उसको मन छुन सकिँदैन । पाठकको मन छुने र उसलाई सन्तुष्ट पार्ने ध्येय लिएर अघि बढ्नुहोस् । यसले तपाईंको लेखनशैलीलाई स्वतः सरल, सहज, स्पष्ट, छरितो, अकृत्रिम, रसिलो र प्रभावकारी बनाउँदै लैजानेछ । तपाईंलाई पाठकबीच स्वीकार्य बनाउने बाटोमा डोऱ्याउनेछ ।

# शब्दानुशासन

अशुद्ध शब्दको प्रयोग अनर्थकारी हुन्छ। त्यसले वाणीलाई निष्प्रभावी मात्र बनाउँदैन, अन्योल र संकट समेत निम्त्याउन सक्छ। त्यसैले सधैँ शुद्ध, शिष्ट र साधु शब्दको प्रयोग गर्नुपर्छ। शब्दको तत्त्व अर्थात् कुन शब्द शुद्ध हो, त्यो कसरी बनेको हो, त्यसको वास्तविक अर्थ के हो र वाक्यमा त्यसको प्रयोग कुन रूपमा हुन सक्छ भन्ने कुराको बोध व्याकरण विना हुन सक्तैन। शब्द अनन्त छन्; तिनको ज्ञान र तत्त्वबोध कोशबाट मात्र पनि सम्भव छैन। कोशले प्रचलित शब्दहरूको सूची र अर्थ मात्र प्रस्तुत गर्छ; शब्द भने प्रतिदिन निर्माण भइरहन्छन्, थपिइरहन्छन् र तिनले रूप पनि फेरिरहन्छन्। तिनको साधुता निर्क्योल गर्ने मूल आधार व्याकरण नै हो। यसैकारण यसलाई शब्दानुशासन पनि भनिन्छ।

अज्ञान, लापरवाही वा भ्रमका कारण भाषामा अशुद्ध शब्दको चलखेल शुरू हुन्छ। असमर्थ र अयोग्य प्रयोगकर्ताहरूले असाधु शब्दको प्रयोगद्वारा भाषालाई प्रदूषित बनाउँछन्। लामो समयसम्म चारैतिरबाट निरन्तर असाधु शब्द सुन्दै गएपछि व्याकरणमा समुचित प्रवेश नभएका जनसाधारणका निम्ति साधु शब्द नै गलत जस्ता लाग्छन् र अवाचक प्रतीत हुन थाल्छन्। 'धूम' र 'धूम्र' बीचको फरक खुट्याउन असमर्थहरूले 'धूमपान' भन्नुपर्ने ठाउँमा अनवरत 'धूम्रपान' भन्न थालेपछि आम प्रयोगकर्तालाई 'धूमपान' शब्द नै अशुद्ध प्रतीत भएजस्तो। अथवा, 'आकर्षित' र 'आकर्षण' बीचको भेद ठम्याउन नसक्नेहरूले 'विद्यार्थीहरू कम्प्युटरतर्फ आकर्षण भएका छन्' भनेर अव्यवस्था फैलाएजस्तो। शब्दसम्बन्धी तमाम मतिभ्रम व्याकरणको

ज्ञानबाट मात्र दूर हुन सक्छ; साधु शब्दहरूको निर्मल जलधाराले भाषाको कल्मष सफा गर्ने कार्य व्याकरणले मात्र गर्न सक्छ ।

प्रत्येक भाषाको आफ्नै प्रकृति हुन्छ । उसमा आफ्नै खालको व्यवस्था एवं नियम अन्तर्निहित हुन्छ । वर्ण, शब्द, रूप, वाक्य आदिमा अन्तर्निहित त्यस्ता नियमहरूको पहिचान गरी तिनलाई क्रमबद्ध गर्ने काम व्याकरणले गर्छ । यसले भाषाका नियमहरूसँग परिचित गराउँछ; शब्द बन्ने प्रक्रिया, शब्दका भेद र तिनको प्रयोगविधिबारे अवगत गराउँछ । शब्दप्रयोग एवं वाक्यगठनमा हुने आधारभूत गल्तीहरूबाट बच्न सिकाउँछ । आफ्नो अभिव्यक्ति व्याकरणका गल्तीबाट मुक्त हुन थालेपछि मानिसमा नयाँ आत्मविश्वास प्रादुर्भाव हुन्छ जसले भाषालाई परिष्कृत तथा प्रभावशाली बनाउने दिशातर्फको ढोका खोल्छ ।

तर, व्याकरण रसिलो विषय होइन । त्यसैले यसप्रति मानिसको रुचि सामान्यतः कम हुन्छ । यद्यपि हामीकहाँ प्राथमिक तहदेखि स्नातक तहसम्म नै नेपाली भाषा र व्याकरण अनिवार्य विषयका रूपमा पढाइ हुन्छ तर यसलाई गम्भीर रूपमा नलिने प्रचलन छ । फलतः अरू त अरू, उच्च शिक्षितहरू र शब्दसँगै खेल्नुपर्ने पेशामा लागेकाहरूको नेपाली पनि व्याकरणका त्रुटि एवं दोषहरूबाट ग्रस्त हुन्छ । त्यसले उनीहरूको भाषा र समग्र अभिव्यक्तिलाई नै कमजोर बनाइरहेको हुन्छ । यही यथार्थलाई ध्यानमा राखेर पुस्तकको अंगका रूपमा व्याकरणका आधारभूत कुराहरूलाई यहाँ सरल एवं संक्षिप्त तवरमा प्रस्तुत गर्न लागिएको छ । यस क्रममा आवश्यक कुरा नछुटुन् र मसिना विवरण तथा रौंचिरा विश्लेषणले ठाउँ नपाउन् भन्नेतर्फ ध्यान दिइएको छ । व्याकरण पढाउने होइन, त्यसको सिंहावलोकन गराउने मात्र यसको ध्येय हो ।

# वर्ण

मनको भाव व्यक्त गर्ने ध्वनिको सार्थक समष्टिलाई भाषा भनिन्छ। भाषा मूलतः बोलिने कुरा हो जसलाई लिपिले लेख्य रूपमा प्रस्तुत गर्छ। बोलिने भाषालाई कथ्य भाषा र लेखिने भाषालाई लेख्य भाषा भनिन्छ। त्यसरी उच्चारण गरिएको वा लेखिएको एउटा ध्वनि नै वर्ण हो। वर्णको सार्थक समूह शब्द हो भने शब्दहरूको सार्थक समूह वाक्य। शब्दको सार्थकता अर्थात् यस शब्दबाट यो अर्थ बुझ्नुपर्छ भन्ने कुरा परम्परा र व्यवहारबाट निर्दिष्ट हुन्छ।

वर्ण ध्वनिको सबैभन्दा सानो एकाइ हो जसलाई टुक्र्याउन सकिदैन। वर्ण दुई किसिमका हुन्छन्– स्वर र व्यञ्जन। दुवैको साझा नाम वर्णमाला हो। परम्परागत नेपाली वर्णमाला देवनागरी लिपिमा र उच्चारण स्थानको वर्गीकरण संस्कृत व्याकरणको मान्यतामा आधारित छ।

## स्वर

अ, आ, इ, ई, उ, ऊ, ऋ, ए, ऐ, ओ, औ, अं, अः स्वरवर्ण हुन्।

*अ, इ, उ* मूल स्वर हुन् भने *आ, ई, ऊ* र *ए, ऐ, ओ, औ* मूल स्वरहरूको जोडबाट बनेका स्वर हुन्। 'अ' मा अनुस्वार र विसर्ग लागेर *अं* र *अः* बनेका छन्। *अ, इ, उ, ऋ* ह्रस्व स्वर हुन्; बाँकी सबै स्वर दीर्घ।

वर्णमालामा चन्द्रविन्दुलाई समावेश गरिँदैन किन भने त्यो छुट्टै वर्ण वा ध्वनि होइन, 'नाके ध्वनि' मात्र हो। त्यसको उच्चारण स्वरसँगै मिसिएर हुन्छ। अनुस्वारको उच्चारण भने स्वरभन्दा पृथक् हुन्छ र यसले स्वरलाई

दीर्घ बनाइदिन्छ । झट्ट हेर्दा अनुस्वार एउटा सानो विन्दु मात्र भए पनि यसले ठाउँ हेरी *ङ, ञ, ण, न, म* पाँचवटै अक्षरको समेत प्रतिनिधित्व गर्छ ।

## व्यञ्जन

क, ख, ग, घ, ङ, च, छ, ज, झ, ञ, ट, ठ, ड, ढ, ण, त, थ, द, ध, न, प, फ, ब, भ, म, य, र, ल, व, श, ष, स, ह, व्यञ्जन वर्ण हुन् ।

वर्णमालामा व्यञ्जन अन्तर्गत *क्ष, त्र, ज्ञ* पनि रहेका छन् तर ती छुट्टै वर्ण नभएर संयुक्त अक्षर हुन् । क् र ष् मिलेर *क्ष* बनेको छ, त् र र् मिलेर *त्र* बनेको छ अनि ज् र ञ् मिलेर *ज्ञ* बनेको छ ।

स्वर आफ्नै खुट्टामा उभिएका हुन्छन्, त्यसैले तिनको उच्चारण आफैं हुन्छ । तर व्यञ्जन खुट्टा काटिएका हुन्छन्, त्यसैले तिनलाई उभिन र उच्चारण गर्न स्वरको आधार चाहिन्छ । उच्चारण गर्न सजिलो होस् भनेर नै तिनलाई वर्णमालामा अ को आधार दिएर राख्ने गरिएको छ । क, ख, ग, घ आदिलाई व्यञ्जन भन्ने गरिए पनि वास्तविक व्यञ्जन *क्, ख्, ग्, घ्* आदि हुन् ।

व्यञ्जनमा स्वर लागेर बाह्रखरी बन्छ । जस्तै : क, का, कि, की, कु, कू, के, कै, को, कौ, कं, कः । स्वरसँग मिलेर उभिए पनि व्यञ्जनलाई संयुक्त भनिंदैन । ह्रस्व स्वर लाग्दा ह्रस्व र दीर्घ स्वर लाग्दा दीर्घ चाहिं भनिन्छ ।

## उच्चारण

स्वर, व्यञ्जन सबैको उच्चारण निश्चित ठाउँबाट हुन्छ । जस्तै–

कवर्ग अर्थात् *क, ख, ग, घ, ङ* उच्चारण गर्दा जिब्राको पछिल्लो भागले घाँटीभन्दा अलिक अगाडि मास्तिर छुन्छ (कण्ठ स्थान) ।

चवर्ग अर्थात् *च, छ, ज, झ, ञ* उच्चारण गर्दा जिब्राको अघिल्लो भागले त्यसभन्दा अगाडि छुन्छ (तालु स्थान) ।

टवर्ग अर्थात् *ट, ठ, ड, ढ, ण* उच्चारण गर्दा जिब्राको अघिल्लो भाग अझ अगाडि ठोकिन्छ (मूर्द्धा स्थान) ।

तवर्ग अर्थात् *त, थ, द, ध, न* उच्चारण गर्दा जिब्राको टुप्पाले दाँतमा छुन्छ (दन्त स्थान)।

पवर्ग अर्थात् *प, फ, ब, भ, म* उच्चारण गर्दा दुवै ओठ जोडिन्छन् (ओष्ठ स्थान)।

त्यस्तै *अ, ह* लाई पनि कण्ठस्थानीय; *इ, य, श* लाई पनि तालुस्थानीय; *ऋ, र, ष* लाई पनि मूर्द्धास्थानीय; *ल, स* लाई पनि दन्तस्थानीय र *उ* लाई पनि ओष्ठस्थानीय मानिएको छ। साथै *ए, ऐ* लाई कण्ठ-तालुस्थानीय; *ओ, औ* लाई कण्ठ-ओष्ठस्थानीय र *व* लाई दन्त-ओष्ठस्थानीय (दाँत ओठमा ठोकिने र ओठ जोडिने काम सँगै हुने) मानिएको छ।

व्यञ्जनमा *क* देखि *म* सम्मका अक्षरको उच्चारण गर्दा जिब्राले उच्चारण स्थानमा राम्ररी छुन्छ (स्पर्श)। *य, र, ल, व* उच्चारण गर्दा जिब्रो उच्चारण स्थानतिर जान्छ र हलुका छुन्छ (अन्तःस्थ)। *श, ष, स, ह* उच्चारण गर्दा उच्चारण स्थानमा छुनै आँटेको वेलामा सासको घर्षण हुन्छ (ऊष्म/संघर्षी)। स्वरको उच्चारण गर्दा चाहिं ठाउँ थोरै खुल्न पुग्छ (विवृत)।

## आधुनिक विश्लेषण

आधुनिक नेपाली विश्लेषण अनुसार 'कथ्य नेपाली वर्णमाला' परम्परागत भन्दा केही पृथक् छ।

तदनुसार, कथ्य नेपाली भाषामा छवटा मात्र स्वर छन्– *अ, आ, इ, उ, ए ओ*। स्वरमा ह्रस्व र दीर्घको भेद छैन, किन भने ती अर्थभेदक (उच्चारणबाट अर्थको भिन्नता दर्शाउन सक्ने) छैनन्। त्यस्तै, कथ्य नेपालीमा २९ वटा मात्र व्यञ्जन छन्। *ञ, ण, श, ष, क्ष, त्र, ज्ञ* बेग्लै व्यञ्जन होइनन्, किन भने ती पनि अर्थभेदक छैनन्। बोलिंदा *ञ-यँ, श-ष-स, क्ष-छ्य, त्र-त्र्, ज्ञ-ग्यँ* मा अन्तर छैन। *ण* को उच्चारण ठाउँ हेरी *न* वा ङँ जस्तो मात्र सुनिने (*ण* कहिल्यै नसुनिने) भनी यसलाई पनि बेग्लै व्यञ्जन मानिदैन।

# शब्द

अर्थ निस्कने एउटै वर्ण वा अनेक वर्णहरूको समूह शब्द हो। शब्दलाई नै खास अवस्थामा पद पनि भनिन्छ। भाषा शब्दहरूले बन्ने भएकाले यसमा शब्दको महत्त्व सबैभन्दा बढी हुन्छ। शब्दलाई स्रोत, रूप, अर्थ र कार्यका आधारमा वर्गीकरण गर्न सकिन्छ।

**स्रोतका आधारमा** नेपाली भाषाका शब्दलाई चार किसिमका मानिएको छ– तत्सम, तद्भव, झर्रा र आगन्तुक।

तत्सम : संस्कृतबाट जस्ताको तस्तै आएका शब्द।
जस्तै– आत्मा, अक्षर, बुद्धि, तपस्या, विद्या, ईश्वर आदि।

तद्भव : संस्कृतबाट रूप फेरिएर आएका शब्द।
जस्तै– काठ, आँसु, गाउँ, चैत, छाता, नाइके आदि।

झर्रा : अरू कतैबाट नलिइएका, मूलभूत रूपमै नेपाली शब्द।
जस्तै– असिना, बिर्को, नाङ्लो, छरितो, टुप्लुक्क, भुर्, त, पो, आनाकानी आदि। यिनलाई 'देशज' पनि भनिन्छ।

आगन्तुक : संस्कृत बाहेक अन्य भाषाबाट आएका सबै खाले (रूप फेरिएका वा नफेरिएका) शब्द।
जस्तै– शहर, बजार, नोकर, जर्नेल, सिमन्टी, कप्तान, टेबल, कुर्सी, कोट, प्यान्ट आदि।

**रूपात्मक आधारमा** शब्दलाई दुई प्रकारले हेर्न सकिन्छ। पहिलो आधार हो व्युत्पन्नता। यस दृष्टिले शब्द दुई किसिमका हुन्छन्– *व्युत्पन्न* र *अव्युत्पन्न*। उपसर्ग लागेर, प्रत्यय लागेर, समास भएर वा द्वित्व भएर बनेका

शब्द व्युत्पन्न अन्तर्गत पर्छन् । कुनै पनि प्रत्यय नलागी प्रचलनमा आएका वा व्युत्पत्ति पत्ता नलागेका शब्द अव्युत्पन्न अन्तर्गत पर्छन् ।

दोस्रो आधार हो विकार । यस दृष्टिले पनि शब्द दुई किसिमका हुन्छन्– *विकारी* र *अविकारी* । वचन, विभक्ति, लिंग आदिका कारणले रूप फेरिने शब्द *विकारी* हुन् । नाम, सर्वनाम, विशेषण र क्रिया विकारी अन्तर्गत पर्छन् । त्यसरी रूप नफेरिने शब्द *अविकारी* हुन् । अव्यय वर्गका शब्दहरू (क्रियायोगी, नामयोगी, संयोजक, विस्मयादिबोधक, निपात) अविकारी अन्तर्गत पर्छन् ।

**अर्थका आधारमा** शब्द पाँच किसिमका मानिन्छन्– *नाम, सर्वनाम, विशेषण, क्रिया* र *अव्यय* ।

**कार्यगत आधारमा** शब्द तीन किसिमका हुन्छन्– *नामिक पद, क्रियापद* र *अव्यय* । नामसँग सम्बद्ध भई काम गर्ने नाम, सर्वनाम र विशेषण नामिक वर्गमा पर्छन् । धातुमा प्रत्यय लागी बन्ने क्रियाका रूप क्रिया वर्गमा पर्छन् । रूप नचल्ने क्रियायोगी, नामयोगी, संयोजक, विस्मयादिबोधक र निपात अव्यय वर्गभित्र पर्छन् ।

### नाम

व्यक्ति, वस्तु, स्थान, अवस्था, धारणा, भाव आदिको नाउँ बताउने शब्दलाई नाम भनिन्छ । नाम तीन किसिमका छन् :

१. **व्यक्तिवाचक** : एउटा व्यक्ति, ठाउँ, दिन, वस्तु आदिको नाउँ किटेर बताउने । जस्तै– राम, श्याम, बुद्ध, अंशुवर्मा, सीता, भानुभक्त; काठमाडौं, जनकपुर, सगरमाथा, अमेरिका; रामनवमी, दशैं, तिहार; गुलाफ, सयपत्री, सुन्तला, कटहर आदि ।

२. **जातिवाचक** : व्यक्ति, ठाउँ, वस्तु आदिको साझा नाउँ बताउने । जस्तै– मानिस, गाई, घोडा, बनमान्छे, कुकुर; पहाड, नदी, खोलो, जंगल; फूल, कलम, घडी, पुस्तक; बाहुन, छेत्री, थापा, बस्नेत आदि । (परम्परागत व्याकरणमा सुन, चाँदी, हावा, पानी, दाल, चामल जस्ता

वस्तु बुझाउने नामलाई 'द्रव्यवाचक' र जन्ती, टोली, सेना, झुत्तो, मुठो जस्ता समूह बुझाउने नामलाई 'समूहवाचक' भनेर वर्गीकरण गरिएको छ । तर यी दुवै जातिवाचक नाम अन्तर्गत समाविष्ट हुन सक्छन् ।)

३. **भाववाचक** : भाव, धारणा, गुण, अवस्था आदि अमूर्त कुरा जनाउने । जस्तै– सुख, दुःख, दया, माया; गरीबी, नोकरी, मित्रता, एकता, अस्तित्व, निजत्व, सौन्दर्य, सौजन्य, मौन, यौवन, कथन; पढाइ, लेखाइ, हँसाइ, बोलाइ; अग्लाइ, मोटाइ, छरितोपन, हलुकापन आदि । *नोकरी, मित्रता* जस्ता शब्द नामबाट; *पढाइ, लेखाइ* जस्ता शब्द धातुबाट र *अग्लाइ, मोटाइ* जस्ता शब्द विशेषणबाट बनेका हुन् ।

## सर्वनाम

नामको सट्टा आउने शब्दलाई सर्वनाम भनिन्छ । एउटै सन्दर्भमा एउटै नामलाई पटकपटक दोहोऱ्याइरहनुपर्ने झमेलाबाट बचाएर सर्वनामले भाषालाई छरितो बनाउन सघाउँछन् । सर्वनाम छ किसिमका छन् :

१. **पुरुषवाचक** : बोल्ने-सुन्ने व्यक्ति वा कुरा गरिने विषय बुझाउने । जस्तै– म, हामी (प्रथम पुरुष); तँ, तिमी, तपाईं, हजूर, यहाँ (द्वितीय पुरुष); त्यो, तिनी, यो, यिनी, ऊ, उनी आदि (तृतीय पुरुष) ।

२. **निजवाचक** : कर्ताका निम्ति 'स्वयं' को अर्थ लिएर आउने । जस्तै– आफू, आफैं । *आफैं* ले यदाकदा *स्वतः* को पनि अर्थ दिन्छ। उदाहरणः क. राम आफैं भात पकाउँछ (स्वयं) । ख. रूख आफैं ढल्यो (स्वतः) ।

३. **दर्शक वा निश्चयवाचक** : कुनै व्यक्ति, वस्तु वा धारणालाई तोकेर बुझाउने ।
जस्तै– यो, त्यो, यिनी, उनी, यहाँ, त्यहाँ, प्रत्येक, हरेक आदि ।

४. **अनिश्चयवाचक** : कसैलाई वा केहीलाई तोकेर नबुझाउने । जस्तै– कोही, केही, कतै, कुनै, जोसुकै, जुनसुकै, जो पनि, जे पनि, जहिले पनि आदि ।

५. **प्रश्नवाचक** : प्रश्न गरेको बुझाउने ।
जस्तै– को, के, कहिले, कहाँ, किन, कसरी, कुन, कसले, कोसँग, कसमा आदि ।

६. **सम्बन्धवाचक** : उपवाक्यहरूका बीच सम्बन्ध देखाउने ।
जस्तै– जो-त्यो, जसले-उसले, जहाँ-त्यहाँ आदि । उदाहरण : जो पढ्दैन त्यो फेल हुन्छ । जसले मह काढ्छ उसले हात चाट्छ । जहाँ इच्छा त्यहाँ उपाय ।

## विशेषण

नाम वा सर्वनामको विशेषता जनाउने शब्दलाई विशेषण भनिन्छ । विशेषणले जुन पदको विशेषता जनाउँछ त्यसलाई विशेष्य भन्छन् । विशेषणले विशेष्यको अर्थ स्पष्ट पार्ने, विस्तार गर्ने वा सीमित पार्ने काम गर्छ । विशेषण पाँच किसिमका छन् :

१. **गुणबोधक** : गुण, दोष, अवस्था आदि बताउने ।
जस्तै– राम्रो, नराम्रो, असल, खराब, होचो, अग्लो, गुलियो, नुनिलो, बुद्धिमान, मूर्ख, इमानदार, बेइमान, जुनेली, घरेलु, धनी, गरीब, मायालु, दयालु, अल्छी, जाँगरिलो, सन्काहा, बुझक्कड, पढेको, बसेको, उभिएको आदि ।

२. **सम्बन्धबोधक** : ठाउँ, वस्तु, समय आदिसँग सम्बन्ध जनाउने ।
जस्तै– नेपाली, जापानी, पहाडे, मधेसी, झापाली, दडाली, रिक्सावाल, झण्डावाल, मानवीय, पाशविक, चैते, कात्तिके आदि ।

षष्ठी विभक्ति लागेका शब्दले समेत सम्बन्धबोधक विशेषणको काम गर्छन् । (यिनलाई 'भेदक विशेषण' पनि भनिन्छ ।) जस्तै– रामको छोरो, सीताको पुस्तक, सोनामकी आमा ।

३. **परिमाणबोधक** : परिमाण जनाउने ।
जस्तै– यति, उति, थोरै, धेरै, अलिकति, प्रशस्त, कतिपय, सम्पूर्ण, लगभग, तमाम, जम्मै आदि ।

४. **संख्याबोधक** : गन्ती बुझाउने ।
जस्तै– एक, दुई, सय, हजार, लाख, करोड; पहिलो, दोस्रो, आठौं, प्रथम, द्वितीय; एकोहोरो, दोहोरो, दोब्बर, तेब्बर, चारगुणा, दशगुणा आदि । 'औं' जोडिएर बन्ने संख्याबोधक विशेषणले कुनै वेला क्रम बुझाउँछन् भने कुनै वेला चाहिं धेरै वा त्यसभन्दा बढी भन्ने अर्थ बुझाउँछन् । जस्तै– सातौं खम्बा । लाखौं मानिस ।

५. **संकेतबोधक** : नजीक वा टाढाको नामलाई संकेत गर्ने ।
जस्तै– त्यो, यो, ती, यी आदि ।
सर्वनामलाई नै विशेषणका रूपमा प्रयोग गरिने हुँदा यिनलाई *सार्वनामिक विशेषण* पनि भनिन्छ । यस्ता सर्वनाम वाक्यमा एक्लै आएमा सर्वनामकै रूपमा रहन्छन् भने नामसँग आएमा संकेतबोधक विशेषण बन्न पुग्छन् । जस्तै :

| | |
|---|---|
| त्यो भुक्तैन । | त्यो कुकुर भुक्तैन । |
| यो चिसो छ । | यो चिया चिसो छ । |
| यी रुन्छिन् । | यी नानी रुन्छिन् । |

## विशेषणका अवस्था

कतिपय विशेषणले तीन अवस्थामा रहेर नामको विशेषता जनाउँछन् । जस्तै :

- राम बाठो छ । राम श्यामभन्दा बाठो छ । राम सबैभन्दा बाठो छ ।
- गुलाफ राम्रो छ । गुलाफ सयपत्रीभन्दा राम्रो छ । गुलाफ सबैभन्दा राम्रो छ ।
- सगरमाथा अग्लो छ । सगरमाथा मकालुभन्दा अग्लो छ । सगरमाथा सबैभन्दा अग्लो छ ।

पहिलो अवस्थालाई *सामान्य,* दोस्रोलाई *तुलनात्मक* र तेस्रोलाई *विशिष्ट* भनिन्छ । दोस्रो र तेस्रो अवस्थालाई बुझाउन कतिपय तत्सम शब्दमा 'तर' र 'तम' प्रत्यय लगाउने पनि चलन छ । जस्तै– उच्च, उच्चतर,

उच्चतम । निम्न, निम्नतर, निम्नतम । गहन, गहनतर, गहनतम । अधिक, अधिकतर, अधिकतम ।

विशेषण यदाकदा आफैं नामको रूप लिएर आउँछन् भने कहिलेकाहीं नाम पनि विशेषणको रूप लिएर आउँछन् । जस्तै :

*विशेषण नामका रूपमा–* झापालीले कचकच गऱ्यो । रिक्सावालले जुलूस निकाले । नेपालमा धनीभन्दा गरीब बढी छन् । रातो राम्रो, गुलियो मीठो ।

*नाम विशेषणका रूपमा–* बस्नेत दाइ हाँस्नुभो । भानिज दाइ आउनुभो । बिजुली बत्ती बल्यो । खरदार भाइ सुत्न गए ।

## क्रिया

कुनै काम भएको वा हुने कुरा बुझाउने शब्दलाई क्रिया भनिन्छ । क्रिया नभएको वाक्य सामान्यतः अपूर्ण र अर्थहीन हुन्छ। वाक्य टुंग्याउने क्रियालाई समापिका क्रिया वा क्रियापद भनिन्छ। वाक्य जत्रोसुकै भए पनि क्रियापद नै त्यसको केन्द्रबिन्दु हुन्छ। (*लेख्छ* क्रियापद हो भने *लेख्नु* क्रियामूल र *लेख्* धातु।)

कार्यका आधारमा क्रिया वा धातु दुई प्रकारका छन्– सकर्मक र अकर्मक ।

१. **सकर्मक** : कर्म खोज्ने ।
   जस्तै– खानु, पिउनु, पढ्नु, हेर्नु, गर्नु, कुट्नु, टोक्नु आदि ।
   उदाहरण : म भात खान्छु। हरि रामलाई कुट्छ। उमा किताप पढ्छिन्। दिदी तस्वीर हेर्नुहुन्छ।

२. **अकर्मक** : कर्म नखोज्ने ।
   जस्तै– सुत्नु, उठ्नु, आउनु, जानु, हाँस्नु, थाक्नु, रुनु, लड्नु आदि ।
   उदाहरण : म सुत्छु। हरि उठ्छ। उमा आउँछिन्।

सकर्मक क्रिया भएको वाक्यमा कर्ता र क्रियापद मात्र राख्दा के वा कसलाई भन्ने प्रश्न उठ्छ । त्यसको उत्तरमा जे आउँछ त्यो कर्म हुन्छ ।

जस्तै– *उमा पढ्छिन्* भन्दा *के* भन्ने प्रश्न उठ्छ । त्यसको उत्तरमा आउने *किताप* कर्म हो । *हरि कुट्छ* भन्दा *कसलाई* भन्ने प्रश्न उठ्छ । त्यसको उत्तरमा आउने *रामलाई* कर्म हो । तर *विनीता जान्छिन्* भन्दा *के* अथवा *कसलाई* भन्ने प्रश्न नउठेर *कहाँ* भन्ने प्रश्न उठ्छ । अतः त्यसको उत्तरमा आउने *घर* कर्म होइन ।

कुनै सकर्मक क्रियाले दुइटा कर्म खोज्छ । त्यस्तालाई *द्विकर्मक क्रिया* भन्छन् । जस्तै– दिनु, तिर्नु, बेच्नु, बाँड्नु, सोध्नु आदि । उदाहरण : मैले दुर्गालाई कलम दिएँ । दुर्गाले रीतालाई रिन तिरिन् । रीताले हरिलाई घडी बेचिन् । उसले हामीलाई चकलेट बाँड्यो ।

सकर्मक क्रिया भएको भूतकालिक वाक्यको कर्तामा 'ले' लाग्छ । जस्तै– *उमाले किताप पढिन् । हरिले रामलाई कुट्यो ।* तर अकर्मकमा 'ले' लाग्दैन । *राम सुत्यो* हुन्छ; *रामले सुत्यो* हुँदैन ।

## क्रियायोगी

क्रियाको विशेषता र परिवेश जनाउने शब्दलाई क्रियायोगी भनिन्छ । यो दुई प्रकारको हुन्छ– क्रियाविशेषण र क्रियान्वयी ।

१. **क्रियाविशेषण** : क्रियाको विशेषणका रूपमा आउने वा अवस्था बुझाउने ।

जस्तै– झलमल्ल, ढकमक्क, मुसुक्क, दनादन, फटाफट, फनफनी, दनदनी, झ्याउँ-झ्याउँ; राम्ररी, धेरै, थोरै, छिटो, बिस्तारै आदि ।

(अनुकरणात्मक सबैजसो शब्द क्रियाविशेषण हुन्छन् ।)

२. **क्रियान्वयी** : क्रियापदसँग सम्बन्ध राख्ने ।

जस्तै– तल, माथि, भित्र, बाहिर, अझ, झन्, भने, बल्ल, बिछट्ट; दौडेर, रोएर, गई, आई, हाँस्तै, खेल्दै, खान, बस्न, लेख्ता, पढ्दा आदि ।

क्रियायोगी कहिलेकाहीं *विशेषणको विशेषण* भएर आउँछ । जस्तै- विमला *झन् दुब्ली* भइन् । सुरेश *अझ मोटो* भयो । सीता *बिछट्ट राम्री* छ । विजय *धेरै कालो* छ । कहिलेकाहीं चाहिं क्रियायोगी स्वयं *क्रियायोगीकै*

*विशेषण* भएर पनि आउँछ। जस्तै– रमेश *अझ छिटो* दगुऱ्यो। पेन्सिल *झन् तल* छिऱ्यो। प्रीति *खुर्र दौडेर* आई।

**नामयोगी**

नामिक पदसँग जोडिएर वा नजोडिई विभिन्न अर्थ स्पष्ट्याउने।

जस्तै– तिर, सम्म, विना, सँग, बारे, सित, भन्दा, जस्तै, सरह, मध्ये, पिच्छे, पछि, बाहेक, बित्तिकै, वारि, पारि, भित्र, बाहिर, अगाडि, पछाडि, बमोजिम, मुताबिक आदि।

- *वारि, पारि, भित्र, बाहिर, मुनि, माथि* जस्ता शब्द *नामयोगी* का रूपमा नामसँग जोडिएर आउँछन् भने *क्रियायोगी* का रूपमा छुट्टै रहने गरी आउँछन्। जस्तै– घरभित्र मान्छे छ, घरबाहिर कुकुर छ। कुकुर भित्र पस्यो, मान्छे बाहिर आयो।

**संयोजक**

शब्द, उपवाक्य वा वाक्यहरूलाई जोड्ने। जस्तै– र, पनि, तर, अनि, वा, कि, परन्तु, नत्र आदि।

**विस्मयादिबोधक**

हर्ष, बिस्मात, आश्चर्य, घृणा, तिरस्कार आदि जनाउने। जस्तै– अहा, वाह, ज्या, ओहो, आम्मै, कठै, छिः, थुक्क, धत् आदि।

विस्मयादिबोधक शब्द प्रायः वाक्यका अगाडि आएर बस्छन्। यिनले व्यक्त गरेको भावलाई नै वाक्यले विस्तार गरेको वा स्पष्ट्याएको हुन्छ।

**निपात**

शब्द वा वाक्यको अर्थलाई चम्किलो पार्ने। जस्तै– नि, पो, त, नै, ल, न, क्या, रे, कि, हौ, खै, लौ, हँ, ब्यारे, क्यारे, चाहिं, मात्र, हगि आदि।

# बनोट र रूपविस्तार

### शब्दको बनोट

बनोट अर्थात् निर्माणका दृष्टिले शब्द दुई प्रकारका छन्– १. मूल, २. व्युत्पन्न । मूल शब्दलाई रूढ र व्युत्पन्न शब्दलाई यौगिक पनि भन्ने गरिएको छ ।

कुनै प्रत्यय नलागी स्वयं सिद्ध भएका वा प्राकृतिक रूपमै रहेका शब्दलाई मूल शब्द भन्छन् । जस्तै– म, तँ, घर, आमा, रातो, बाठो, तल, माथि, दाम्चो, गुन्द्रुक आदि ।

विभिन्न प्रत्यय लागेर, शब्दहरू मिलेर वा अरू किसिमले बनेका शब्दलाई व्युत्पन्न भन्छन् । व्युत्पन्न शब्द सामान्यतः चार किसिमले बन्छन् :

#### १. उपसर्ग लागेर

शब्दका अगाडि लाग्ने एक खालका अव्यय उपसर्ग हुन् जसले शब्दको अर्थलाई उकाल्ने, ओराल्ने, मिलाउने वा फरक पार्ने काम गर्छन् । जस्तै– संवाद, विवाद, अनुवाद, अपवाद, प्रतिवाद । प्रहार, आहार, संहार, विहार, परिहार, उपहार, अनुहार । प्रयोग, संयोग, वियोग, आयोग, नियोग, सुयोग, उद्योग, उपयोग, सहयोग, अभियोग । बेकार, बेताल, बेमोज, बेहोश, बेकम्मा, बेहिसाब, बेइज्जत, बेमौसम आदि ।

#### २. प्रत्यय लागेर

शब्दका अन्त्यमा जोडिएर विशेष अर्थ वा मूल शब्दकै अर्थ बुझाउने

वर्ण वा वर्णसमूहलाई प्रत्यय (परसर्ग वा फुँदा पनि) भन्छन् । प्रत्यय लागेर तीन खालका शब्द बन्छन् :

क. **कृदन्त** : धातुमा प्रत्यय (*कृत्*) लागेर बनेका शब्द (नाम, विशेषण र अव्यय) ।

जस्तै– पाठ, लेख, त्याग, दान, पाठक, रचना, नायक, शिक्षक; लेखाइ, भोगाइ, मगनी, थालनी, चलन, अह्रोट, हप्की; पढन्ता, मगन्ते, बोलक्कड, मिचाहा, चिनारु, हँसिलो, खाने, खाएको; खाँदै, खान, खाएर, खाई, खाँदा आदि ।

ख. **तद्धितान्त** : नाम, विशेषण, अव्यय आदिमा प्रत्यय (*तद्धित*) लागेर बनेका शब्द ।

जस्तै– मानव, कौशल, काल्पनिक, सुखी, एकता, नेतृत्व, सौजन्य, मौलिक, ग्रामीण, हर्षित, बलवान, मेधावी; यात्री, ज्ञानी, लोभी, खेती, नोकरी, घडेरी, अंकुशे, रत्यौली, पण्डित्याइँ; गफाडी, जुवाडी, झगडालु, नेपाली, दाउरे, घरेलु, जँड्याहा; बेसरी, राम्ररी, भित्री, बाहिरी, तल्लो आदि ।

ग. **नामधातु** : नाम, विशेषण, अव्यय आदिबाट (प्रत्यय लागेर वा नलागी) बनेका धातु ।

जस्तै (क्रियामूलका रूपमा)– खर्चनु, डराउनु, रोगाउनु, इखिनु, धुलिनु, धुल्याउनु, मुन्ट्याउनु; दुब्लाउनु, मोटाउनु, अग्लिनु, तेर्सिनु, बांगिनु, रित्याउनु, बंग्याउनु; टाढिनु, बाहिरिनु, भित्रिनु, भित्र्याउनु, नजिक्याउनु, पछ्याउनु, छक्किनु, छक्याउनु, डिच्याउनु आदि ।

### ३. समास भएर

दुई वा दुईभन्दा बढी शब्द मिलेर एउटा शब्द बन्ने प्रक्रियालाई समास भन्छन् । समास छ प्रकारका छन् :

क. **अव्ययीभाव** : अव्ययसँग अरू शब्दको समास हुने र अव्ययको अर्थ मुख्य हुने ।

जस्तै– आजन्म, आमरण, प्रतिदिन, प्रतिव्यक्ति, यथाशक्ति, यथासम्भव, भरपेट आदि ।

ख. **तत्पुरुष** : पहिलो शब्दको अर्थ गौण र पछिल्लो शब्दको अर्थ मुख्य हुने ।

जस्तै– आशातीत, प्रेमपूर्ण, मदमत्त, घरखर्च, देशनिकाला, वनवास, राजकुमार, छात्रावास, पुस्तकालय, जनसेवा, कन्यादान, कार्यपत्र, चिन्तामुक्त, घरभाडा आदि ।

ग. **कर्मधारय** : दुवै शब्द एउटै कारक/विभक्तिमा आएर समास हुने र पछिल्लो शब्दको अर्थ मुख्य हुने (यो तत्पुरुषकै भेद हो) ।

जस्तै– नीलकमल, गहुँगोरो, मूलघर, शिष्टाचार, मुखचन्द्र, चरणकमल, अन्धविश्वास, पूर्णविराम आदि ।

घ. **द्विगु** : पहिलो शब्द संख्यावाचक हुने र समुदाय वा समूहको अर्थ मुख्य हुने (यो कर्मधारयको पनि भेद हो) ।

जस्तै– एकाना, दोबाटो, पञ्चामृत, सप्तकोशी, नवरत्न आदि ।

ङ. **बहुव्रीहि** : समास भएका शब्दहरूको भन्दा बेग्लै अर्थ मुख्य हुने ।

जस्तै– नीलकण्ठ, चन्द्रशेखर, अमूल्य, निर्लज्ज, नकटो, माछापुच्छ्रे, लामखुट्टे, तीनफुटे, नौतले, मुसलधारे आदि ।

च. **द्वन्द्व** : दुवै/सबै शब्दको अर्थ मुख्य हुने ।

जस्तै– आमाबाबु, ठिटाठिटी, फलफूल, अन्नपानी, लेखपढ, तन-मन-धन आदि ।

### ४. द्वित्व भएर

पूरै शब्द वा शब्दको अंश दोहोरिएर आउनुलाई द्वित्व भन्छन् ।

जस्तै– घरघर, सडकसडक, भनाभन, पिटापिट, कुदाकुद,

जाँदाजाँदा, उठीउठी, मुक्कामुक्की, चर्काचर्की, खोलैखोला, सुनैसुन, बनिबनाउ, अगलबगल, आलोपालो, चुपचाप, सुनसान, उल्टोपाल्टो, बाटबाटै, तात्तातो, फरफर, सलल्ल, तनतनी, झैझगडा आदि ।

## सन्धि

दुई वर्ण मिलेर एक हुनु वा एक्लै पनि वर्णको रूपान्तरण भएर जोडिनुलाई सन्धि भन्छन् । उपसर्ग लाग्दा, प्रत्यय लाग्दा र समास हुँदा शब्दहरू बीच सन्धि हुन्छ । सन्धिको नियम अनुसार नै मूल स्वर (अ, इ, उ) बाट अन्य स्वर (आ, ई, ऊ, ए, ऐ, ओ, औ) को निर्माण हुन्छ । दुई *अ* मिलेर *आ,* दुई *इ* मिलेर *ई* तथा दुई *उ* मिलेर *ऊ* बन्छन् । त्यस्तै *अ* र *इ* मिलेर *ए, अ* र *ए* मिलेर *ऐ, अ* र *उ* मिलेर *ओ* तथा *अ* र *ओ* मिलेर *औ* बन्छन् । सन्धि मुख्यतः तीन प्रकारका छन् ।

**क. स्वरसन्धि** : स्वरसँग स्वरवर्ण मिलेर हुने । जस्तै :

| | | | | |
|---|---|---|---|---|
| शास्त्र | + | अर्थ | = | शास्त्रार्थ (अ+अ=आ) |
| रवि | + | इन्द्र | = | रवीन्द्र (इ+इ=ई) |
| सु | + | उक्ति | = | सूक्ति (उ+उ=ऊ) |
| शुभ | + | इच्छा | = | शुभेच्छा (अ+इ=ए) |
| सदा | + | एव | = | सदैव (आ+ए=ऐ) |
| सूर्य | + | उदय | = | सूर्योदय (अ+उ=ओ) |
| वन | + | ओषधि | = | वनौषधि (अ+ओ=औ) |
| महा | + | ऋषि | = | महर्षि (आ+ऋ=अर्) |
| यदि | + | अपि | = | यद्यपि (इ=य्) |
| सु | + | आगत | = | स्वागत (उ=व्) |
| विद्या | + | आलय | = | विद्यालय (आ+आ=आ) |
| सफा | + | आइ | = | सफाइ (आ+आ=आ) |
| बर्मा | + | एली | = | बर्मेली (आ लोप भएको) |
| भारत | + | एली | = | भारतेली (अ लोप भएको) |

**ख. व्यञ्जनसन्धि** : व्यञ्जनसँग व्यञ्जन वर्ण मिलेर हुने । जस्तै :

| | | | | |
|---|---|---|---|---|
| वाक् | + | दान | = | वाग्दान (क्=ग्) |
| वाक् | + | मय | = | वाङ्मय (क्=ङ्) |
| जगत् | + | नाथ | = | जगन्नाथ (त्=न्) |
| सत् | + | जन | = | सज्जन (त्=ज्) |
| सत् | + | चित् | = | सच्चित् (त्=च्) |
| सत् | + | धर्म | = | सद्धर्म (त्=द्) |
| तत् | + | लीन | = | तल्लीन (त्=ल्) |
| पर | + | लो | = | पल्लो (र=ल्) |

शब्दका बीचमा अनुस्वार आएमा अनुस्वार पछि आउने व्यञ्जनको पञ्चम वर्ण हुने (वैकल्पिक रूपमा) :

शंकर– शङ्कर । शंख– शङ्ख । संचय– सञ्चय । घंटा– घण्टा । संतान– सन्तान । शंभु– शम्भु ।

**ग. विसर्गसन्धि** : विसर्गसँग अर्को वर्ण मिलेर हुने । जस्तै :

| | | | | |
|---|---|---|---|---|
| दुः | + | गुण | = | दुर्गुण (विसर्गको ठाउँमा रेफ) |
| निः | + | चल | = | निश्चल (विसर्गको ठाउँमा श्) |
| निः | + | फल | = | निष्फल (विसर्गको ठाउँमा ष्) |
| नमः | + | कार | = | नमस्कार (विसर्गको ठाउँमा स्) |
| मनः | + | रञ्जन | = | मनोरञ्जन (विसर्गको ठाउँमा ओ) |
| निः | + | रस | = | नीरस (विसर्गको ठाउँमा दीर्घ) |

## शब्दको रूपविस्तार

लिंग, वचन, कारक, विभक्ति, काल आदिका कारण वा तिनका निम्ति शब्दहरूको रूप फेरिन्छ जसलाई रूपविस्तार भन्छन् । यसले शब्दलाई लचक प्रदान गर्छ ।

**१. लिंग**

लिंग शब्दको त्यो रूप हो जसले स्त्री, पुरुष र निर्जीव वस्तुबारे ज्ञात गराउँछ। पुलिंगले पुरुष जातिलाई र स्त्रीलिंगले स्त्री जातिलाई बुझाउँछ। जस्तै– बा, भाइ, राम, केटो; आमा, बहिनी, सीता, केटी आदि । घर, फूल, फलाम, पानी, सडक जस्ता निर्जीव/भालेपोथी नछुट्टिने वस्तु बुझाउने शब्दलाई परम्परागत रूपमा नपुंसकलिंगी मानिने भए पनि यस्ता शब्दको व्यवहार पुलिंगी सरह हुन्छ। यिनमा पुलिंगकै क्रियापद लाग्छ।

कतिपय अवस्थामा पुलिंगबाट विविध प्रक्रियाद्वारा स्त्रीलिंग जनाउने शब्द बन्छन् । जस्तै : काका-काकी, नाति-नातिनी, मीत-मितिनी, मास्टर-मास्टर्नी, राजा-रानी, मामा-माइजू, विद्वान-विदुषी आदि ।

**२. वचन**

वचन शब्दको त्यो रूप हो जसले एउटा वा धेरै छुट्याउँछ। वचन दुई किसिमका हुन्छन्– *एकवचन* र *बहुवचन*। एकवचनले एउटालाई बुझाउँछ भने बहुवचनले एकभन्दा बढीलाई बुझाउँछ। बहुवचन जनाउन सामान्यतः एकवचनमा हरू जोडिन्छ। जस्तै– गुरु-गुरुहरू, मान्छे-मान्छेहरू, घर-घर हरू, स्कूल-स्कूलहरू, पुस्तक-पुस्तकहरू आदि ।

- समूहलाई बुझाउने शब्द विशेष परिस्थितिमा बाहेक एकवचनमा मात्र प्रयोग हुन्छन् र तिनमा हरू लाग्दैन। जस्तै– टोली, बथान, समूह, भीड, हूल, परिवार, समुदाय आदि ।
  जन्ती, सेना र जनता चाहिं समूहवाचक भए पनि एकवचन र बहुवचन दुवैमा प्रयोग हुन्छन् । जस्तै– जन्ती आयो, जन्ती आए। सेना आयो, सेना आए। जनताले निर्णय दियो, जनताले निर्णय दिए।
- *वटा, जना, गण, वर्ग, जन, समुदाय, वृन्द* जस्ता शब्द जोड्दा पनि हरू लाग्दैन । जस्तै– पाँचवटा स्याउ, चार जना मान्छे, छात्रगण, मित्रवर्ग, मान्यजन, जनसमुदाय, सज्जनवृन्द आदि ।

- गन्ती गर्न नसकिने नाममा पनि हरू लाग्दैन। जस्तै– पानी, तेल, धान, चामल, धूलो, पीठो, सुन, चाँदी आदि।

### ३. पुरुष

बोलाइको सन्दर्भमा गाँसिने सहभागीहरूको प्रकृतिलाई पुरुषले जनाउँछ। यो खास गरी सर्वनामसँग सम्बद्ध हुन्छ। पुरुष तीन प्रकारका छन्। *म, हामी* प्रथम पुरुष; *तँ, तिमी, तपाईं* द्वितीय पुरुष र *त्यो, यो, ती, यी, राम, श्याम, गीता* आदि तृतीय पुरुष अन्तर्गत पर्छन्। बोल्ने व्यक्तिलाई प्रथम पुरुषले, उसले कुरा गर्दै गरेको व्यक्तिलाई द्वितीय पुरुषले र बाँकी सबैलाई तृतीय पुरुषले जनाउँछ। तृतीय पुरुषलाई अन्य पुरुष भन्ने चलन पनि छ।

द्वितीय र तृतीय पुरुषले मिलेर आदरका चार तह जनाउँछन्। जस्तै– तँ (त्यो), तिमी (यिनी), तपाईं (उहाँ), हजुर (आदरसूचक नाम)। *यहाँ, मौसूफ* आदि पनि आदरका तह हुन्।

### ४. कारक र विभक्ति

क्रियासँग कार्यगत सम्बन्ध राख्ने नाम, सर्वनामका विभिन्न रूप र अवस्था कारक हुन्। त्यस्तो सम्बन्ध बुझाउन कारकमा लाग्ने चिह्न (प्रत्यय) लाई विभक्ति भनिन्छ। ती यसप्रकार छन्:

| *कारक* | | *चिह्न* | *विभक्ति* |
|---|---|---|---|
| कर्ता | (काम गर्ने) | ले/बाट/xx | प्रथमा |
| कर्म | (गरिने कुरा) | लाई | द्वितीया |
| करण | (माध्यम) | बाट/द्वारा/ले | तृतीया |
| सम्प्रदान | (निम्ति/दान) | लाई/का लागि | चतुर्थी |
| अपादान | (सीमा/स्थान) | देखि/बाट | पञ्चमी |
| सम्बन्ध | (नाता) | को/का/की आदि | षष्ठी |
| अधिकरण | (आधार) | मा/माथि | सप्तमी |

यीमध्ये सम्बन्ध (षष्ठी) को क्रियासँग सोझो सम्बन्ध हुँदैन । त्यसैले षष्ठी विभक्ति लागेको नाम वा सर्वनामको रूपलाई कारक नमानी 'भेदक विशेषण' मानिन्छ । साथै, परम्परागत रूपमा सम्बोधन (बोलावट) लाई अलग्गै कारक मानिँदै आएको भए पनि अब त्यसलाई कर्ता (प्रथमा) अन्तर्गत मान्न थालिएको छ ।

**५. तिर्यक् कारक**

विभक्ति लाग्दा शब्दको रूप परिवर्तन हुने अवस्थालाई तिर्यक् कारकले जनाउँछ । मुख्यतः ओकारान्त नामिक (नाम, सर्वनाम, विशेषण) बहुवचन हुँदा वा तिनमा विभक्ति जोडिंदा तिर्यक् कारकको प्रयोग हुन्छ । यस अन्तर्गत :

**क.** **ओकारान्त नाम** बहुवचन हुँदा वा त्यसमा विभक्ति जोडिंदा *ओ* को ठाउँमा *आ* हुन्छ । जस्तै :
खोलो– खोला, खोलाहरू; खोलाले, खोलाबाट, खोलामा । केटो– केटा, केटाहरू; केटालाई, केटाको, केटामा । डालो– डालाहरू, डालाबाट, डालामा ।

**ख.** **ओकारान्त विशेषण** (स्वयं वा विशेष्य) बहुवचन हुँदा वा त्यसमा विभक्ति जोडिंदा आकारान्त बन्न पुग्छ । जस्तै :
गोरो केटो– गोरा केटाहरू, गोरा केटाले । होचो घर– होचा घरहरू, होचा घरका, होचा घरबाट, होचा घरमा । (विशेष्यमा विभक्ति लागेका वेला यो नियम वैकल्पिक हुन्छ । जस्तै– होचो घरबाट, होचो घरमा ।) गोराहरूले, एउटा कालालाई, होचाको, सानामा ।

❑ सम्बन्धबोधक विशेषणका रूपमा रहेका (षष्ठी विभक्ति लागेका) शब्दमा चाहिं, विशेष्य एकवचन छ भने त्यसमा विभक्ति जोडिए पनि, तिर्यक् लगाइरहनु आवश्यक छैन । जस्तै :

घरको कामले । रामको छोरालाई । मामाको गाडीमा । भानुभक्तको गाउँबाट । कमलको फूलको गन्धले । बसको ड्राइभरको शर्टको दाहिनेतिरको खल्तीको पैसाले ।

ग. **ओकारान्त सर्वनाम**मा एकवचनमा विभक्ति जोडिंदा अन्त्यमा अस हुन्छ । जस्तै :
त्यो– त्यसले । यो– यसलाई । को– कसबाट । जो– जसमा ।

– *त्यो* र यो को बहुवचनमा विभक्ति लाग्दा *इन* वा *इनी* हुन्छ । जस्तै : त्यो (ती)– तिनले, तिनीहरूले । यो (यी)– यिनले, यिनीहरूले; यिनलाई, यिनीहरूलाई ।

– ऊ एकवचनमा विभक्ति लाग्दा *उस* बन्छ र बहुवचनमा *उनीहरू* बन्छ । जस्तै–
उसले, उसलाई उसबाट । उनीहरूले, उनीहरूलाई, उनीहरूबाट, उनीहरूमा ।

– तिर्यक् कारकमा सर्वनामको अरू किसिमले पनि रूप परिवर्तन हुन्छ । जस्तै :
म– मेरो, मेरा, मेरी; आफू– आफ्नो, आफ्ना, आफ्नी; तिमी– तिम्रो, तिम्रा, तिम्री; तँ– तेरो, तेरा, तेरी । म– मैले, तँ– तैंले आदि ।

– सर्वनाम विशेषणका रूपमा आएको अवस्थामा विशेष्यमा विभक्ति लाग्दा तिर्यक्को प्रयोग वैकल्पिक हुन्छ । जस्तै : त्यो भूत– त्यस भूतले– त्यो भूतले । यो मान्छे– यस मान्छेलाई– यो मान्छेलाई । त्यो बस– त्यस बसमा– त्यो बसमा ।

घ. **क्रियार्थक संज्ञा** ('नु' लागेको क्रिया) मा विभक्ति जोडिंदा *उ* को ठाउँमा *आ* हुन्छ । जस्तै : जानु– जानाले, जानाको, जानामा; देख्नु– देख्नाले, देख्नालाई, देख्नाको आदि । (यो नियम पनि व्यवहारमा वैकल्पिक बनिसकेको छ ।)

## ६. काल र पक्ष

कालले क्रियाका विभिन्न अवस्था र समयलाई जनाउँछ । काल मुख्यतः तीन किसिमका छन्– भूत, वर्तमान र भविष्यत् । बितिसकेको समय भूत, भइरहेको समय वर्तमान र आउने समय भविष्यत् हो ।

हरेक कालका सामान्य, पूर्ण, अपूर्ण तीन पक्ष छन् । जस्तै :

| | *सामान्य* | *पूर्ण* | *अपूर्ण* |
|---|---|---|---|
| *भूतकाल* | पढ्यो | पढेको थियो | पढ्दैथियो |
| *वर्तमानकाल* | पढ्छ | पढेको छ | पढ्दैछ |
| *भविष्यत्काल* | पढ्नेछ | पढेको हुनेछ | पढ्दै हुनेछ |

यस बाहेक भूतकालको *'अज्ञात'* पक्ष र भूत तथा वर्तमानको *'अभ्यस्त'* पक्ष पनि छन् । *पढेछ,* देखेछ जस्ता क्रियाका रूपले *भूतकालको अज्ञात पक्ष* लाई व्यक्त गर्छन् । त्यसैगरी *पढ्थ्यो, खेल्थ्यो* जस्ता रूपले भूतकालको *अभ्यस्त पक्ष* लाई र *पढ्ने गर्छ, खेल्ने गर्छ* जस्ता रूपले *वर्तमानकालको अभ्यस्त पक्ष* लाई दर्शाउँछन् ।

साथै, उक्त सबै काल र पक्षहरूको *'सम्भावना'* देखाउने अर्को पक्ष पनि छ । यो पक्ष *होला* क्रिया थपिएर प्रकट हुन्छ । जस्तै– पढ्यो होला, पढ्छ होला, पढेको होला, पढ्दै होला, पढ्ने होला आदि । भविष्यत्कालमा भने *पढ्ला* मात्रले पनि सम्भावना प्रकट गर्छ ।

- ❑ वर्तमानकाल कति वा कहाँदेखि कहाँसम्म हो भन्ने पर्गेल्न सजिलो छैन । एक त, बोल्दाबोल्दै पनि बोलिसकेको अक्षर भूतकालमा पुगिसक्छ भने बोल्न बाँकी अक्षर भविष्यत्कालमै हुन्छ । त्यसका बीचमा वर्तमानकाल भन्न सकिने कुनै क्षण नै बाँकी रहँदैन । अर्कातिर, सिंगो शताब्दीलाई समेत वर्तमानकालकै रूपमा लिएर 'यस शताब्दीमा मानिस सम्पूर्ण रोगहरूबाट मुक्त हुने प्रयासमा अघि बढिरहेको छ' पनि भनिन्छ । त्यसैले, बोल्ने/सुन्नेले सन्दर्भ अनुसार जत्रो समयावधिलाई वर्तमान ठान्छन् त्यही वर्तमानकाल हुन पुग्छ ।

- भविष्यत्काललाई वर्तमानकालका रूपमा लिने समेत पर्याप्त प्रचलन छ। जस्तै : म भरे जान्छु। भोलि फर्कन्छु। आघौं बिहा गर्छु। भोलि फूटबल म्याच हुँदैछ। आगामी वर्ष बसपार्क बन्दैछ। तीन वर्ष पछि पुल बन्छ। म अर्को वर्ष अमेरिका जान्छु र दश वर्ष पछि फर्कन्छु। जीवनको अन्तिम दशकतिर पुगेपछि गीतापाठ र योगाभ्यास शुरू गर्छु।
- कहिलेकाहीं भूतकाललाई पनि अवधारणागत रूपमा अति निकट ठानेर वर्तमानकालकै रूपमा लिने गरेको पाइन्छ। जस्तै : महाकवि कालिदास प्रकृतिको मानवीकरण गर्छन्। शेक्सपियर प्रेम र युद्धमा सबै कुरा जायज मान्छन्। लक्ष्मीप्रसाद देवकोटा भन्छन्– 'मानिस ठूलो दिलले हुन्छ जातले हुँदैन।'

### ७. करण र अकरण

कुनै पनि वाक्य करण र अकरण दुई किसिमका हुन्छन्। क्रियापदको सकारात्मक कार्य जनाउनेलाई करण र नकारात्मक कार्य जनाउनेलाई अकरण भन्छन्। सबै वाक्यलाई करणबाट अकरण वा अकरणबाट करण बनाउन सकिन्छ। जस्तै :

म आउँछु। म आउँदिनँ।

राम घर जान्छ। राम घर जाँदैन।

सीता पुस्तक किन्छिन्। सीता पुस्तक किन्दिनन्।

विनय स्कूल जाला। विनय स्कूल नजाला।

हरि पोखरामा बस्थ्यो। हरि पोखरामा बस्तैनथ्यो।

हामीले पढ्नुपर्दैन। हामीले पढ्नुपर्छ।

तिमी बिहान-बिहान दगुर्दैनथ्यौ। तिमी बिहान-बिहान दगुर्थ्यौ।

**युगल अकरण** अर्थात् दोहोरो नकारात्मक अर्थ दिने गरी कार्य वा क्रियाको संयोजन भएमा त्यसले सकारात्मक अर्थ दिन्छ। सामान्य करण

वाक्यको तुलनामा यस्ता वाक्यले सकारात्मकतामा जोड समेत दिएका हुन्छन् । जस्तै :

मैले घर नगई भएन । (जानैपर्ने भयो)

ऊ कुरा नबुझ्ने मान्छे होइन । (बुझ्ने नै हो)

ऊ कोट नलगाई क्याम्पस जाँदैन । (लगाएरै जान्छ)

त्यो फटाहालाई नहप्काई भएन । (हप्काउनैपर्‍यो)

हामीले प्रयास गरेनौं भन्ने होइन । (गरेकै हो)

**८. क्रियाका अन्य रूप**

संरचना, अर्थ, भाव, समापकता आदिका दृष्टिले पनि क्रियाका विविध रूप छन् । तीमध्ये छ रूप यसप्रकार छन् :

**क. संयुक्त** : दुई बेग्लाबेग्लै क्रिया मिलेर एकमुस्ट रूपमा एउटै अर्थ दिने । यस्तालाई मिलित क्रिया पनि भन्छन् । यिनमा पहिलो क्रिया मुख्य हुन्छ र दोस्रो चाहिं गौण हुन्छ । (संयुक्त क्रियाले समेत सामान्य क्रियाले व्यक्त गर्ने सबै काल, पक्ष आदिलाई व्यक्त गर्छन् ।) जस्तै :

गरिदेऊ, आइहाल, भनिसक्यो, बसिरहन्छ, खाइदियो, बोलिदिन्छ, लेख्न थाल्छ, पढ्छ होला, खाँदैगर्छ, हिंड्दैगर्छ आदि ।

संयुक्त क्रियामा कहिलेकाहीं दुईभन्दा बढी क्रिया पनि मिलेर आउँछन् । जस्तै– लेखिदिइसक्यो, भनिदिइपठायो, रोइदिइहाली, गइसकिहालिछ आदि ।

**ख. प्रेरणार्थक** : प्रेरणा दिने अर्थात् काम गर्न लगाउने अर्थ जनाउने । यस्ता क्रिया क्रियाबाटै जन्मिएका हुन्छन् । (प्रेरणार्थक क्रियाले पनि सामान्य क्रियाले व्यक्त गर्ने सबै काल, पक्ष आदिलाई व्यक्त गर्छन् ।) जस्तै :

पढाउनु, लेखाउनु, बसाउनु, हिंडाउनु, घुमाउनु; पढ्न लगाउनु, लेख्न लगाउनु, बस्न लगाउनु, हिंड्न लगाउनु आदि ।

ग. **विध्यर्थक** : आज्ञा, इच्छा, अह्राेट, कामना, अनुरोध आदि अर्थ बुझाउने । जस्तै :
म धेरै पढूँ । तँ पढ् । तिमी पढ । तपाईं पढ्नुहोस् । त्यो पढोस् । छिटो दौडी । चाँडै घर जानू । राम्ररी पढ्नू । उसको काम गरिदेऊ । बहिनीलाई पढाऊ । फूल नटिप्नुहोला । फोहर नगर्नुहोला । दुःख दियो भन्ने नठान्नुहोला । आउँदै गरे । चिरञ्जीवी भए । तपाईंको भलो होस् । जनताको जय होस् । श्रीपशुपतिनाथले सबैको कल्याण गरुन् ।

घ. **असमापिका** : वाक्य नटुंग्याउने क्रियाका रूप । जस्तै :
खेलेको, खेल्दै, खेलेर, खेली, खेल्ने, खेल्नु, खेलेपछि, खेल्दा, खेल्न आदि ।
असमापिका क्रियाले नाम, विशेषण, क्रियायोगी आदिको काम गर्छन् । उपवाक्यहरूलाई एउटै वाक्यमा संयोजन गर्न यिनको महत्त्वपूर्ण भूमिका हुन्छ । (असमापिकाकै दुई रूपलाई पूर्वकालिक र उत्तरकालिक क्रियाको नाम दिइएको छ ।)

ङ. **पूर्वकालिक** : एउटा काम सकेर अर्को काम थालेको वा थाल्ने कुरा बुझाउने । जस्तै :
देखी, हेरी; भनेर, गएर; भनीकन, गरीकन; खाईवरी, पुगीवरी आदि ।

च. **उत्तरकालिक** : कुनै कामपछि हुने वा गरिने कुरा बुझाउने । जस्तै :
खान, हेर्न, बस्न, सुन्न, लेख्न, पढ्न, हाँस्न, गम्न, लड्न, गर्न, घुम्न आदि ।

# वाक्य

पूर्ण भाव प्रकट गर्ने शब्द-समूहलाई वाक्य भनिन्छ। एउटा वाक्यमा कम्तीमा दुई पद हुनैपर्छ– कर्ता र क्रियापद । *बहिनी हाँस्छे* मा *बहिनी* कर्ता हो भने *हाँस्छे* क्रियापद । *भाइ रोयो* मा *भाइ* कर्ता हो भने *रोयो* क्रियापद ।

## उद्देश्य र विधेय

हरेक वाक्यका दुई भाग हुन्छन्– उद्देश्य र विधेय। उद्देश्य कर्तासँग सम्बन्धित हुन्छ भने विधेय क्रियासँग । अर्थात्, वाक्यमा कर्तासँग सम्बद्ध कुरा जति उद्देश्य हो, क्रिया र कर्मसँग सम्बद्ध रहेको बाँकी कुरा विधेय हो । *घाम उदायो* मा *घाम* उद्देश्य र *उदायो* विधेय हो । *मनीषा क्याम्पस जान्छे* मा *मनीषा* उद्देश्य र *क्याम्पस जान्छे* विधेय हो । *दश वर्षदेखि चितवनबाट राजनीति गरिरहेको प्रदीप यसपालि सांसद बन्न सफल भयो* मा *प्रदीप* सम्मको अंश उद्देश्य र त्यसपछिको अंश विधेय हो ।

## पदक्रम

वाक्यमा शब्दहरू रहने सिलसिलालाई पदक्रम भन्छन् । कर्ता-कर्म-क्रिया वाक्यको सामान्य पदक्रम हो। अर्थात्, वाक्यमा पहिले कर्ता, त्यसपछि कर्म र अन्त्यमा क्रियापद आउनुपर्छ। जस्तै– विनीता चिठी पढ्छे/विनय बजार जान्छ। बोलाइ र लेखाइको सजिलो एवं स्वाभाविक पदक्रम यही हो ।

विशेष भाव बुझाउनुपर्दा र साहित्यिक अभिव्यक्तिमा भने यो पदक्रम उलटफेर हुन पुग्छ जसलाई विशिष्ट वा आलंकारिक पदक्रम भनिन्छ ।

जस्तै– चिठी विनीता पढ्छे। बजार जान्छ विनय। फुट्यो मूल प्रतिभाको। रुँदै फर्कन्छ घर पोखरेली साइँलो।

## पदसंगति

वाक्यमा कर्ता र क्रियाका बीच लिंग, वचन, पुरुष र आदरमा मेल हुनु नै पदसंगति हो। विशेष्य र विशेषणका बीच पनि त्यस्तै मेल हुनुपर्छ। यस्तो मेल अर्थात् पदसंगति नभएको वाक्य अशुद्ध हुन्छ र त्यसले सही अर्थ दिँदैन।

- **लिंग** : कर्ता जुन लिंगको हुन्छ, क्रियापदको लिंग त्यही अनुसार मिलेको हुनुपर्छ। जस्तै– भाइ हाँस्छ। बहिनी हाँस्छे। सुरेश किताप पढ्छ। अनिता चिठी लेख्छिन् आदि।

  बहुवचनमा भने क्रियापदमा लिंग छुट्याउनुपर्दैन। जस्तै– भाइहरू आए, बहिनीहरू आए। केटाहरू खेल्छन्, केटीहरू खेल्छन्। छोराहरू गए, बुहारीहरू गए आदि।

  पशुपन्छी जनाउने शब्द स्त्रीलिंगको भए पनि क्रियापदमा स्त्रीलिंग जरूरी हुँदैन। जस्तै– गाई आयो, पोथी बास्यो आदि।

- **वचन** : कर्ता जुन वचनको हुन्छ, क्रियापद पनि त्यही वचनको हुनुपर्छ। जस्तै– गाडी आउँछ, गाडीहरू आउँछन्। त्यहाँ कुर्सी छ, त्यहाँ कुर्सीहरू छन्। म खान्छु, हामी खान्छौं आदि।

  एकवचनका नामहरूलाई संयोजकले जोडेको छ भने क्रियापद बहुवचन हुन्छ। जस्तै– राम र श्याम गाउँछन्। एउटा सितार, एउटा सारंगी र एउटा मादल कोठामा राखिएका छन्।

  अलगअलग अनेक वस्तु भए पनि तिनलाई समुच्चयमा एकै रूपमा बुझाइएको छ भने चाहिं क्रियापद एकवचन नै हुन्छ। जस्तै– थालमा मकै-भटमास छ। दालभात, तरकारी पाक्यो। सिरक, डसना, तकिया र झूल दराजमा छ। झोलामा आँप, लिची, अम्बा, केरा र नस्पाती छ। सुर्ती, बिंडी, जर्दा, पान; यसले लिन्छ हाम्रो ज्यान आदि।

आदरार्थीमा क्रियापदको लिंग र वचन सधैं एउटै हुन्छ; पुलिंग मात्र र एकवचन मात्र। जस्तै– आमा बस्नुहुन्छ, बुबा बस्नुहुन्छ। दिदी आउनुहुन्छ, दिदीहरू आउनुहुन्छ आदि।

- **पुरुष** : क्रियापदको तालमेल पुरुषसँग पनि हुनुपर्छ। प्रथम, द्वितीय र तृतीय पुरुष मध्ये कर्ता जुन पुरुषमा छ, क्रियापद त्यही अनुरूप हुनुपर्छ। जस्तै– म खेल्छु। हामी खेल्छौं। तिमी खेल्छौ। राम खेल्छ। मैले पढें। हामीले पढ्यौं। तिमीले पढ्यौ। रामले पढ्यो। म पढ्नेछु। तिमी पढ्नेछौ। ऊ पढ्नेछ आदि।

प्रथम पुरुषको स्थिति सबैभन्दा उच्च हुन्छ। *राम, श्याम, सुनीता, तिमी* र *म* लाई एउटै सर्वनामले बुझाउनुपर्दा 'हामी' हुन्छ, *तिमीहरू* वा *तिनीहरू* हुँदैन। त्यसैले प्रथम पुरुषको कर्ता अन्य पुरुषसँग मिलेर आउँदा प्रथम पुरुषकै क्रियापद लाग्छ। जस्तै– राम, श्याम, सुनीता, तिमी र म बजार जान्छौं (*जान्छन्* वा *जान्छौ* होइन)।

बाँकी दुई मध्ये द्वितीय पुरुषको स्थिति तृतीय पुरुषको भन्दा उच्च हुन्छ। *राम* र *तिमी* लाई एउटै सर्वनामले बुझाउनुपर्दा 'तिमीहरू' हुन्छ, *तिनीहरू* हुँदैन। त्यसैले 'राम र तिमी जान्छौ' भनिन्छ, *जान्छन्* भनिंदैन।

- **आदर** : कर्ताले जुन तहको आदर जनाउँछ, क्रियापद त्यही अनुसारको हुनुपर्छ। जस्तै– तँ हाँस्छस्। तिमी हाँस्छौ। तपाईं हाँस्नुहुन्छ। हजूर हाँस्नुहुन्छ। तँ हाँस्नेछस्। तिमी हाँस्नेछौ। तपाईं हाँस्नुहुनेछ। तँ हाँसिस्। तिमी हाँस्यौ। रामबाबु हाँस्नुभो आदि।
- **विशेष्य र विशेषण** : विशेष्य जुन लिंगमा हुन्छ, विशेषण त्यही लिंगमा हुनुपर्छ। जस्तै– गोरो केटो, गोरी केटी। मोटो सुशील, मोटी कमला आदि।

साथै, विशेष्य जुन वचनमा छ, विशेषणलाई पनि सामान्यतः त्यही वचनमा राख्नुपर्छ। जस्तै– गोरो केटो, गोरा केटाहरू। अग्लो घर, अग्ला घरहरू आदि।

विशेष्य स्त्रीलिंग र बहुवचनमा छ भने चाहिं विशेषणको लिंग जुन राखे पनि हुन्छ। जस्तै– गोरा केटीहरू, गोरी केटीहरू आदि।

**वाच्य**

वाक्यमा कर्ता, कर्म वा भाव (क्रिया) मध्ये कुनै एकलाई प्रधान बनाएर प्रस्तुत गर्ने प्रक्रिया नै वाच्य हो। वाच्य तीन प्रकारका छन् :

१. **कर्तृवाच्य**

वाक्यमा कर्ता प्रधान भएर आउने प्रक्रियालाई कर्तृवाच्य भन्छन्। यसमा क्रियापदको संगति कर्तासँग हुन्छ। (कर्तृवाच्यको प्रयोग सबैभन्दा बढी हुने भएकाले यसैलाई ध्यानमा राखेर 'पदसंगति' को चर्चा गर्ने गरिन्छ।) यसको प्रयोग सकर्मक, अकर्मक दुवैखाले क्रियामा हुन्छ। जस्तै :

म पुस्तक पढ्छु। सुमन बजार जान्छ। बहिनी भाइलाई चिठी लेख्छिन्। तिमी सिनेमा हेर्छौ। हामी मनोविज्ञान पढ्छौं। राम हाँस्छ। म सुत्छु। विजया लजाई। आमा घर फर्कनुभयो आदि।

२. **कर्मवाच्य**

वाक्यमा कर्म प्रधान भएर आउने प्रक्रियालाई कर्मवाच्य भन्छन्। यसको प्रयोग सकर्मक क्रियामा मात्र हुन्छ। यसमा क्रियापदको संगति कर्मसँग हुन्छ। अर्थात्, कर्म जुन वचन, लिंग, पुरुष र आदरको स्थितिमा छ, क्रियापद सोही अनुरूप हुन्छ। कर्ता गौण हुन्छ र वाक्यमा नआउन पनि सक्छ। जस्तै :

मबाट पुस्तक पढिन्छ। मबाट पुस्तकहरू पढिन्छन्। रामद्वारा सीता हेरिन्छिन्। सीताद्वारा राम हेरिन्छ। उमाबाट म पिटिएँ। मबाट उमा पिटिइन्। म पिटिएँ। उमा पिटिइन्। तपाईं देखिनुभयो। तिमी देखियौ। ऊ देखियो आदि।

### ३. भाववाच्य

वाक्यमा क्रिया वा क्रियाको भाव प्रधान भएर आउने प्रक्रियालाई भाववाच्य भन्छन् । यसको प्रयोग सामान्यतः अकर्मक क्रियामा हुन्छ । कर्ता अनुपस्थित हुन्छ वा पूर्णतः गौण हुन्छ । यसमा क्रियापदको संगति कसैसँग पनि हुँदैन र त्यो सधैं तृतीय पुरुषको एकवचनमा, पुलिंगमा मात्र आउँछ । जस्तै :

दिनभरि पढिन्छ । एकाबिहानै उठियो । मस्तसँग सुतियो । पूरै मोटाइयो । कहिले आइयो ? भन्नुसम्म भनियो आदि ।

कहिलेकाहीं सकर्मक क्रियालाई अकर्मक जस्तो बनाएर भाववाच्यमा पनि प्रयोग गरिन्छ । त्यस्तो अवस्थामा एउटा कुरा वा क्रियालाई तीनवटै वाच्यमा व्यक्त गर्न सकिन्छ । जस्तै :

मैले रूख ढालें (कर्तृवाच्य), मबाट रूख ढालियो (कर्मवाच्य), रूखलाई ढालियो (भाववाच्य) ।

## वाक्यका प्रकार

अर्थ वा भावका दृष्टिले वाक्य सामान्यतः सात प्रकारका मानिन्छन् । जस्तै : १. सामान्यार्थक (घरमा बिरालो छ), २. प्रश्नार्थक (तिमी कहिले आयौ ?), ३. आज्ञार्थक (घर जाऊ), ४. इच्छार्थक (तिम्रो भलो होस्), ५. सम्भावनार्थक (प्रकाश घर जाला), ६. संकेतार्थक (तलब पाए लुगा किन्नेथियो), ७. आश्चर्यादिबोधक (अहा, क्या राम्रो बगैंचा !) ।

रूपका दृष्टिले वाक्य तीन प्रकारका छन्– सरल वाक्य, संयुक्त वाक्य र मिश्र वाक्य ।

### १. सरल वाक्य

एउटा मात्र क्रियापद भएको वाक्यलाई सरल वाक्य भन्छन् । जस्तै :

सीता घर गई ।

मैले रामलाई चिठी लेखें ।

घाम डुब्यो । साँझ पऱ्यो ।

२. **संयुक्त वाक्य**

दुई वा दुईभन्दा बढी सरल वाक्य मिलेर बनेको वाक्यलाई संयुक्त वाक्य भन्छन् । यसमा वाक्यहरू संयोजकको सहायताले जोडिएका हुन्छन् र सबै वाक्यको हैसियत बराबर हुन्छ । जस्तै :

घाम डुब्यो र साँझ पर्‍यो ।

कृष्ण अनपढ छ तर चलाख छ ।

राम कलेज जान्छ, चार घण्टा पढ्छ र साँझ घर फर्कन्छ ।

३. **मिश्र वाक्य**

मुख्य वाक्यमा एक वा एकभन्दा बढी सहायक वाक्य मिलेर बनेको वाक्यलाई मिश्र वाक्य भन्छन् । मिश्र वाक्यमा मुख्य वाक्य स्वतन्त्र हुन्छ र सहायक वाक्य (हरू) त्यसको आश्रित भएर आउँछ (आउँछन्) । जस्तै :

घाम डुबेपछि साँझ पर्‍यो ।

कृष्ण अनपढ भए पनि चलाख छ ।

राम कलेज गएर चार घण्टा पढी साँझ घर फर्कन्छ ।

पर्सि बिदा हुन्छ भन्ने निश्चित छ ।

राम चाहन्थ्यो– उमाले एमए पास गरोस् ।

नवीनले उषालाई 'तिमी साँच्चै राम्री छ्यौ' भन्यो ।

जसले मह काढ्छ उसले हात चाट्छ ।

धेरै पैसा कमाइन्छ भनेर उनी जापान गइन् ।

स्कूल जान मात्र के लागेको थिएँ, पानी परिहाल्यो ।

बोलिस् कि कुटाइ खाइस् ।

## उक्ति परिवर्तन

एक जनाले भनेको कुरा अर्कासामु प्रस्तुत गर्नुलाई उक्ति परिवर्तन भनिन्छ । उक्ति परिवर्तन दुई किसिमले गरिन्छ– प्रत्यक्ष कथनद्वारा र अप्रत्यक्ष कथनद्वारा ।

**१. प्रत्यक्ष कथन**

कसैले भनेको कुरा जस्ताको तस्तै प्रस्तुत गर्नु प्रत्यक्ष कथन हो। प्रत्यक्ष कथन प्रायः उद्धरण चिह्नभित्र राखेर गरिन्छ। जस्तै :

हरिले भन्यो, 'म भोलि विराटनगर जान्छु।'

प्रतिमाले भनिन्, 'सीता प्रथम श्रेणीमा पास भई।'

निर्देशक चिह्न (–) दिएर प्रत्यक्ष कथन गरिंदा भने उद्धरण चिह्न नदिने पनि प्रचलन छ। जस्तै :

हरिले भन्यो– म भोलि विराटनगर जान्छु।

प्रतिमाले भनिन्– सीता प्रथम श्रेणीमा पास भई।

**२. अप्रत्यक्ष कथन**

कसैले भनेको कुरा आफ्नो तरीकाले प्रस्तुत गर्नु अप्रत्यक्ष कथन हो। यसमा वक्ताको कथनलाई जस्ताको तस्तै प्रस्तुत नगरेर आवश्यकता अनुसार सामान्य परिवर्तन गरिन्छ र आशय स्पष्ट पारिन्छ। जस्तै :

हरिले भोलि विराटनगर जाने बतायो।

प्रतिमाले सीता प्रथम श्रेणीमा पास भएको खबर सुनाइन्।

**अन्य केही उदाहरण :**

- राजेशले भन्यो, 'भात कति बजे पाक्छ ?'
  *राजेशले भात कति बजे पाक्छ भनेर सोध्यो/जान्न चाह्यो।*
- रामले हामीलाई भन्यो, 'चुरोट नखाऊ।'
  *रामले हामीलाई चुरोट नखान अनुरोध गर्‍यो।*
- गुरुले भन्नुभयो, 'बेन्चमाथि उभिऊ।'
  *गुरुले बेन्चमाथि उभिने आदेश दिनुभयो।*
- रीताले भनिन्, 'भोलि नगरकोट जाऔं।'
  *रीताले भोलि नगरकोट जाने प्रस्ताव राखिन्।*
- अरुणले भन्यो, 'रिजल्ट छिटै निस्केला।'
  *अरुणले रिजल्ट छिटै निस्कने आशा व्यक्त गर्‍यो।*

## अर्थगत भंगिमा

अर्थका दृष्टिले शब्दका अनेकौं आयाम र भंगिमा हुन्छन् । सामान्यतः एउटा शब्दले एउटा अर्थ बुझाउँछ । तर कतिपय शब्दले अनेकौं अर्थ बुझाउँछन् । कतिपय शब्दहरूको अर्थ एकै खालको वा उस्तै हुन्छ भने कतिपयले परस्परविरोधी अर्थ दिन्छन् । केही शब्दले विशिष्ट अर्थ बुझाउँछन् त कतिपयले कुनै ध्वनि वा क्रियाकलापको छनक दिइरहेका हुन्छन् ।

- अनेकार्थक : एउटै शब्दले धेरै अर्थ बुझाउने । जस्तै :
  अर्थ – माने (मतलब), धन, फल, कारण, अभिलाषा ।
  पत्र – पात, पाना, चिठी, तह, अखबार ।
  कर – हात, ढिपी, तिरो, किरण ।

- पर्यायवाची : उस्तै अर्थ बुझाउने । जस्तै :
  आँखा – नेत्र, लोचन, नयन, चक्षु ।
  लोभी – लालची, कन्जूस, किरन्टोकी, चुइयाँ, मक्खीचूस ।
  ज्यादा – धेरै, निकै, सारै, प्रशस्त, थुप्रै, बिघ्नै, अति, अत्यन्त, असाध्य, खूब, चौपट्ट, बिछट्ट, उधुम ।

पर्यायवाची भनेको उस्तै अर्थ बुझाउने मात्र हो । ठ्याक्कै उही अर्थ बुझाउने होइन । उदाहरणका लागि– अल्छी, जुम्सो, लोसो र दीर्घसूत्री पर्यायवाची शब्द हुन् । तर तिनको अर्थमा मिहीन फरक छ । अल्छी भनेको काम गर्न मनै नगर्ने हो; जुम्सो भनेको काम गर्न ढीलो हो; लोसो भनेको गाह्रोसँग काम गर्ने हो र दीर्घसूत्री भनेको सारै ढीलासँग काम गर्ने हो ।

- विपरीतार्थक : उल्टो अर्थ दिने । जस्तै : उज्यालो-अँध्यारो । उचित-अनुचित । कालो-गोरो । सुख-दुःख, साँझ-बिहान । सन्चो-बिसन्चो ।
  यस्ता शब्द सामान्यतः अलग-अलग नै प्रयोग हुन्छन् । तर

कतिपय अवस्थामा एकैचोटि पनि प्रयोग गरिन्छन् । जस्तै– सुखदुःख भनेको यस्तै हो । तपाईंलाई सन्चोबिसन्चो के छ ?

- पारिभाषिक : खासखास क्षेत्र वा विषयमा चल्ने र विशेष खालको अर्थ बुझाउन प्रयोग हुने । जस्तै :

  प्रसारण – विद्युतीय उपकरणको सहायताले ध्वनि, शब्द र दृश्यलाई व्यापक रूपमा फिंजाउने काम ।

  शिलान्यास – घर, पुल, मन्दिर आदि बनाउँदा जगमा विधिपूर्वक पहिलो ढुंगा वा इँटा राख्ने काम ।

  दशगजा – दुई देशको सीमाना छुट्याउने र कुनै पनि देशको अधिकार नहुने क्षेत्र ।

- अनुकरणात्मक : वस्तु वा क्रियाको ध्वनि, दृश्य वा क्रियापलापको छनक दिने । जस्तै :
  - सजीव प्राणीको ध्वनिलाई बुझाउने :
    ख्वाक-ख्वाक, म्याउँ-म्याउँ, बाँ-बाँ, होक्काँ, ङ्यार्र आदि ।
  - निर्जीव पदार्थबाट निस्कने आवाजलाई बुझाउने :
    कलकल, छ्मछ्म, घारघुर, ट्याङट्याङ, गड्याङगुडुङ आदि ।
  - घटना, दृश्य, क्रियाकलापलाई बुझाउने :
    टहटह, झमक्क, मुसुक्क, पिलपिल, चरचरी, खुरुखुरु आदि ।

अनुकरणात्मक शब्दको प्रयोगले वाक्य स्वादिला बन्छन्; भाषा मीठो र प्रभावकारी हुन्छ । यी शब्दको अरू भाषामा छुट्टाछुट्टै अर्थ स्पष्ट हुने गरी अनुवाद गरेर देखाउन प्रायः असम्भव हुन्छ ।

## वाक्पद्धति

विशिष्ट एवं लाक्षणिक अर्थमा सूत्रात्मक रूपले प्रयुक्त हुने पदावलीलाई वाक्पद्धति भनिन्छ । यसलाई टुक्का, तुक्का वा वाग्धारा पनि भन्छन् ।

यसले अभिव्यक्तिलाई सरस, रोचक एवं जीवन्त बनाउँछ ।

'राम हावा खान निस्केको छ' भन्दा टहल्न निस्केको भन्ने सामान्य अर्थ लाग्छ तर 'रामले जाँचमा हावा खाएछ' भन्दा फेल भएछ भन्ने विशिष्ट अर्थ निस्कन्छ । सारगर्भित अर्थ दिने यस्तै प्रयोगलाई वाक्पद्धति भनिएको हो । उदाहरण :

घैंटामा घाम लाग्नु (बुद्धि खुल्नु) । टाप कस्नु (भाग्नु) । आकाशपाताल हाँक्नु (धेरै गफ गर्नु) । मनमा चिसो पस्नु (शंका उठ्नु) । गोरु बेचेको साइनो (जबर्जस्ती गाँसिएको, एकदमै परको नाता) । आकाशको फल (असम्भव वस्तु) ।

## उखान

लोकजीवनमा प्रचलित, अनुभवले भरिएका चुटकिला उक्ति (भनाइ) लाई उखान भनिन्छ । यसलाई आहान वा लोकोक्ति पनि भन्छन् । कुनै कुरा छिटो-छरितो र गहकिलो तवरले स्पष्ट पार्न उखानको प्रयोग गरिन्छ । उखान वाक्यसँगै रहने भए पनि यसको प्रयोग स्वतन्त्र रूपले हुन्छ । उदाहरण :

- आकाशको फल आँखा तरी मर् । (असम्भव कुरामा प्रयास गर्नु)
- काला अक्षर भैंसी बराबर । (लेखपढ गर्न नजान्नु)
- जो होचो उसका मुखमा घोचो । (निर्धालाई सबैले हेप्छन्)
- बाँदरको पुच्छर लौरो न हतियार । (कुनै पनि काममा नआउनु)
- धोबीको कुकुर घरको न घाटको । (कहीं ठाउँ-ठेगाना नभएको)

आफ्नो नेपाली लेखन सुधार्न चाहनेहरू, नेपाली लेख्नैपर्ने पेशा-व्यवसायमा रहेकाहरू तथा सरकारी अड्डा, अदालत, व्यवसाय, बैंक, विद्यालय आदिमा कार्यरत सबैका निम्ति यो पुस्तक सहयोगी र मार्गदर्शक बन्न सक्छ। यो किताब साथमा भएपछि नेपाली कसरी लेख्ने होला भनेर कोही पनि द्विविधामा पर्नुपर्नेछैन।

रु. ३००/-




शिक्षक मासिक